# विषय - सूची

# लेखकको विचार

मैले घरेलू औषधिको भाग प्रथम र दोस्रो प्रकाशमा ल्याएपछि धेरै पाठक वर्गहरूले यसको प्रयोग र सफलतामा मलाई धेरै प्रशंसा पत्र प्राप्त भयो। अब दोस्रो भाग भन्दा धेरै औषधीको उपचार विषय थपेर यो तेस्रो भाग पनि प्रकाशनमा ल्याउने विचार भयो। जसरी प्रथम र दोस्रा भागलाई अपनाएर प्रयोगमा ल्याउनु भएको छ त्यसरी नै यो तेस्रो भागले पनि तपाईहरूलाई उपचारमा सहयोग अवश्य नै मिल्नेछ भन्ने आशा गर्छु। तर सबैले आफुले जानेको अरुलाई पनि प्रचार गरी प्रयोगमा ल्याउनु हुनेछ भन्ने आशा र भरोसामा छु।

पाठकवर्गले आफ्नू प्रयोगको निम्ति किन्नु भएको यो घरेलु औषधी पुस्तक अर्को देखि लुकाउने र आफूले नकिनी अरुको मागेर चलाउने यो हाम्रो नीच बुद्धी हो। कतिले सारेर ल्याई दिन्छु भनी लगेको लगेकै गरिदियो। धेरै नै विचार गर्ने व्यक्तिले मसित सम्पर्क राख्नु होला।

यो पुस्तक मार्फत रोगी जाती भएको अनि आफूले जानेको अरूलाई नसिकाउने अनि औषधी सोधे भन्नु हुदैन भन्ने नीच बुद्धी नगरीदिनु होला। कृपया सबैलाई औषधी प्रयोग र जडी–बूटी झारपातसित परिचय गराई दिनु भए हाम्रो यो औषधी लोप भएर जाने छैन। आफूले एउटा रोगमा प्रयोग गरेका झार–पात अरु रोगहरूमा पनि प्रयोग गर्न सकिन्छ।

हाम्रो भाषामा झार पातको नाउँ एउटै पाइन्दैन कतिले झारपातको नाम आफ्नो भाषामा लेखी पठाउनोस् भनी लेख्छन्। तर वहाँहरूले कुनै झार पात औषधी नचिने गर्ग औषधी भण्डार अलीगढ़ वनौषधी विशेषाङ्क निर्मल आयुर्वेदिक संस्थान इन्डस्ट्रीयल रोड डी ६९ अलीगढ़बाट पुस्तक मगाएर पुस्तकमा दिएका झार पातका नक्सा मिलाएर औषधी प्रयोग गर्नुहोस् यसमा हिमालयदेखि समुद्रतटसम्मको झार पातका विवरणहरू पाउनु हुनेछ।

कति भूलहरु प्रति क्षमा सहित

— मनबहादुर प्रधान।

# 'काँक्रो'

काँक्रो हाम्रो पहाड़मा तिर्खा लाग्दा खाने चलन छ, कतिले साँदेर र तिउन पनि बनाएर खान्छन् मदेसको काँक्रो सानु लामो हुन्छ मदेशमा ककड़ी, खिरा भन्दछन् तर गुण बराबर नै हुन्छ । काँक्रो शीतल, रुचिकर पिशाब सफा गर्ने तृप्तिकारक, पोल्ने, रक्त विकार, तृषा, उल्टी नाशक साथै "डाइविटिज" मा पनि लाभदायक हो।

१. मूत्रकृच्छ,मूत्र घातमा–काँक्राको दुई तोला रस निचोरेर चार आना भरी निबु (कागती) को रस र मिश्री अथवा चीनी मिलाएर खानु पिशाब सफा हुन्छ ।

२. काँक्राको बियाँ गोखरू पाषनभेद (पाखनभेद) अलैंची, केसर सिधे नून बराबर मिलाएर मसिनो पिधनु र आधा तोलाके खुराक चामलको चौलानीमा मिलाएर खाने गरे पिशाबको रोग जाति हुन्छ । अथवा काँक्राको बियाँ दारुहल्दि र मुलेठी (जेठीमधु)बराबर मिलाई पिधेर चामलको चौलेनीसंग खानु अथवा काँक्राको बीयाँ एक दुई तोला सिधेनुन र काँजी मिलाएर खानु मूत्रघात मूत्रावरोध जातिगर्छ । पिशाब सफा गर्न काक्राको वियाँ चार आना भरी अन्दाजमा अलिकता सिधेनून लगाएर आधा सेर दूधमा पानी बराबर मिलाएर चूर्ण फाको लगाएर खड़ा भएर दूध उभि पिउनू बसेर होइन । यसोगरे रोकिएको पिशाब खुल्छ । मूत्राशयको रोग जाति हुन्छ।

३.काक्रोको बियाँमा अलिकता परेवाको सुली लगाएर पिधनु चामलको चौलेनी खाने गरे मुत्र पथरी आफै गलेर निकलन्छ ।

४.स्वेतप्रदरमा :–दुई तोला काँक्राको बियाँ कमलको फूलको पात एक तोला मसीनो पिधेर कमलकै जराको चूर्ण दुई आना भरी अन्दाज मिश्री आधातोला मिलाएर खाने गरे सात दिनमा लाभ हुन्छ ।

५. गर्भवतीको भुँड़ी दुख्नेमा :–काँक्राको जरा एक तोला कुटेर एक पावा दूध र एक पावा पानीमा मिलाएर पकाउनु पानी घटेर दूध मात्र रहे पछि छानेर पिउनाले लाभ हुन्छ । काँक्राको जरा धेरै लगाउनु हुँदैन तोला बराबर ग्राम समझनु ।

६.पिशाब पोल्नेमा :–काँक्राको विया एक तोला पिंधेर एक पावा पानी (अर्थात २५० ग्राम) मा फिटेर पिउनु ।

७. जंगली काँक्रोका जरा बासी पानीमा पिधेर तीन दिन खानाले मूत्र पथरी आफै विलाएर निकलन्छ । यो रामबाण औषधि हो । बन काँक्रा–यो तितो हुनाले जंगलमा यसको चटनी बनाएर खान्छन् । जंगलमा हुनाले बंगालमा यसको चट्नी बनाएर खान्छन् । बंगलामा यसलाई वोनो काँकुड़, हिन्दीमा जंगली ककड़ी अथवा अरण्य ककड़ी भन्दछन् । कसैले गोपाल पेइण्ठुला पनि भन्दछन् । नेपालीमा नाम छैन । यो मूत्र पथरीको उत्तम औषधि हो ।

## 'करेला'

१–नेपालीमा प्राय तिते करेला भन्दछन् , यसको भाजी, तरकारी बनाएर खान्छन् ।

२–मुखको रोग मुख पिलसने अथवा खटीरा भए फलको रसमा अलिकता खलिमटी र चिनी मिलाएर अलि अलि जिब्रोले खेलाउने गरे लाभ गर्छ ।

३–सन्निपात (जोरनी दुख्ने) मा फलको माथि ताछेर फालनु भित्रको भाग आगोमा आलु पोलेर यसमा शकर मिलाएर तातै रोगी लाई खुवाउनु, दिनमा बिहान बेलुकी नौ दस तोलाको खुराक खुवाउनाले दस दिनमा स्नायुगत बात संधि बातमा लाभ गर्छ । आवश्यकता परे अरू बेसी दिन खुवाए हुन्छ ।

४–डाईबिटिज (मधुमेह) मा फल टुक्रा पारेर छायामा सुकाउनु र कुटेर चूर्ण बनाउनु, चार चार आना भरीको खुराक अथवा आधा तोलासम्म महमा अथवा मह नपाए पानीसंग खाने गर्नु, यसले इन्सुलेन्सको दरकार पर्दैन । दिनहुं यसरी खाने गरे केहि दिनमा पिशाबमा चिनी आउन बन्द हुन्छ ।यो प्रयोगले जिउ चिलाउने खटीरा

आदि चर्म रोगमा पनि लाभ गर्छ ।डाईबेटिजमा फलकै रस मात्र एक दुई तोला खाने गरे उत्तम लाभ गर्छ ।साथै पाण्डु रोग (खून कमी) मा पनि लाभ गर्छ ।

५-फियो बड़ेको, गला पुलेकोमा रायो र नून मिलाएर खानाले लाभ गर्छ । गलफुलामा फलको रस सिर्कामा मिलाएर ताततातै लेप गर्दा पनि लाभ गर्छ ।

६-स्तम्भन शक्ति बढाउनुमा करेलाको रसमा करेलाकै पातको रस मिलाएर पकाउनु गोली बनाउने लायक बाक्लो भएपछि अन्दाजले चार चार आना भरीको गोली बनाउनु र एक गोली दूधसंग खानु एकछिनपछि एक चम्चा मह खानु यसको प्रयोगमा उल्टी भए अथवा पखाला लागे घिउ र भात खानु ।

७-पैताला पोल्ने रोगमा करेलाको पातको रस घसनु ।

८-रतौधिमा करेलोको रसमा गोलमरीच पिधेर आँखाको माथि पट्टि पलकमा घस्नु ।

९-सुतकेरीलाई पातको रस खुवाउनाले रक्त शुद्धि हुन्छ दूध बढ़छ ।

१०-दादुरा (माई) को जरोमा हर्दीको चूर्ण मिलाएर खानु ।

११-कामोत्तेजकको लागी-दस तोला करेलाको रस निकालेर रातभरि छाना माथि सितमा राख्नु विहान अड़ाई तोला कुलंजनको चूर्ण मिलाउनु र सुरक्षित राख्नु प्रसंगको बेला आधा घण्टा अघि चार आना भर यो औषधि भैंसीको दूधसंग खानु ।

१२-मूत्र पथरीमा पातको रस तिन तोला डेढ़ तोला दहीमा मिलाएर खाई माथिबाट गाईको मोहिं (मइ) पिउनु तिन दिनसम्म यसरी पिउनु तिन दिन पिएपछि तिन दिन बन्द गर्नु र चौंथा दिनदेखि फेरि यसमा नै लगातार दिनहु चार दिन पिउनु र फेरि चार दिन बन्द गर्नु यसरी नै लगातार एक एक दिन बढ़ाउदै बन्द गर्दै सात दिनसम्म पिउनु । सेवन कालमा खिचड़ी अथवा भात खाने गर्नु रोटि आदि अन्य चिज न खानु । पथरी आफै टुक्रा टुक्रा भएर जान्छ ।

१३-अमलपित्त (खानाखाए) पछि अमिलो डकार आउनेमा अथवा उल्टी हुनेमा करेलाको पात घिउमा भुटेर खानु स्वादको लागी अलिकति नून लगाउनु । करेलाको फूल भए पनि काम लिन सकिन्छ ।

१४–आँखाको रोगमा फुलो, आँखाको जाली परेक ो रतौधि आदि शान्तिको लागि खिया परेको फलामको भाँडामा यसको पातको र ब र गोल मरिच घोटनु र सुर्मा बनाएर लगाउने गर्नु ।

१५–जलोदर–भुँड़िमा पानी भरिने रोगमा विषम जरो ा, कलेजो, फियो बड़ेकोमा यसको पातको रस खाने गर्नु अति उत्तम हो । एक दुई प ट्ट टट्टी लाग्छ भोक बढछ, खानामा रूचि हुन्छ । रसमा बेसार मिलाएर खाए माइरो ग, मह मिलाएर खाये वात रक्त जाति हुन्छ ।

१६–पायल्स (बवासिर) मा करेलाको जराको र स अथवा जरा घोटेर लगाउनु वातको कारणले भएको पायल्स जाति हुन्छ ।

१७–जाडो लागेर आउने जरोमा जरो आइतवारके दिन उखालेर कमर (कम्बर) मा बाँधनु ! जिउ चिलाउनेमा जरा उमालेर घसनु ।

१८–योनि रोग योनी कुनै कारण भित्र पसे जरा घ ोटेर लगाउने गरे स्वाभाविकमा आउछ ।

१९–वातरक्तमा यसको लहरा पिंधेर पकाएक ो घिउ सेवन गर्नु ।

२०–नानीहरूको उल्टि गर्ने रोगमा यसको बि ज बराबर गोल मरिचसंग पिंधेर खुवाउनु ।

२१–पित्तको कारणले टाउको दुखेकोमा य को रस या गाईको घिउ र पित्त पापडा रस मिलाएर लेप गर्नु ।

२२–कान दुखेकोमा यसको रस घिउको ग र्मी जतिको तातो कानमा लगाउनु बेसी तातो पार्नु हुँदैन कान भित्र पोल्छ ।

२३–बन करेला–यो पनि तरकारी खाने चलन छ, यसको जरा एक तोला देखि तीन तोलासम्म दिनहुँ पिंधी छानेर अथवा दूधसंग खाने गरे मूत्रेन्द्रिको पथरी आफैं गलेर निकलन्छ । दस पन्ध्र दिन प्रयोग ग रे आपरेशन गर्नु पर्दैन ।

# 'दूबो झार'

यो झार प्रा य सबैले चिनेको छ । कसैले दूभो पनि भन्छन् तर यसको गुण थाहा हुने बिरलै पाइन्छन् ! बाहुनहरूले कुनै पर्वमा ढोकातिर पनि ल्याएर गोबरले टाँस्ने गर्छन् , यो बांझो चौरतिर प्रसस्त हुन्छ । यसमा पनि नयाँ ठूलो खालको दूबो चाहिं औषधिमा प्रयोग गर्नु उत्तम हो । भिटामिन ए र सी प्रचुर मात्रामा हुन्छ ।

१-पित्त छादनेमा आधा तोला दूबोको रस चामलको चौलानीसंग लिनु अथवा दुई-चार दाना मरिच यसमा लगाएर खानु ।

२-बाउुली लाग्ने रोगमा यसका जराको रस एक आना भर अन्दाजी एक तोला महमा मिलाएर खानू ।

३- रक्त प्रदर (मासिक स्राव ज्यादा हुने) मा दूबोको रसमा सेतो चन्दन घोटेर मिलाएर पिउनू ।

४- पेटमा पानी जम्मा हुने रोगमा दूबोको रसमा गोलमरीच मिलाएर पिउनू पेटमा जम्मा भएको पानी पिशाब भएर जान्छ । साथै जलोदरको कारण शरीर सुनिएको भए पनि लाभ गर्छ ।

५- बलवर्धनको लागी दूबोको रस एक तोला र दसवटा बदाम (कागजी) को बोक्रासंगै धूलो पारेर दस दाना मरीचसंग पिंधेर केही गुलीयो मिलाएर पानीमा फिटेर शर्बत बनाएर पिउनाले शरीर बलवान् हुन्छ ।

६- गर्भपातको लक्षण पाउनासाथ गर्भवतीको रक्त बग्न थाल्छ तत्काल दूबोको रस आधा तोला स्वर्णमाक्षिक भष्म र मुक्ता-शुक्ति एकेक लाल भरी नपाएर सौंफ (माउरी) संग मिलाएर खानू । यो सौंफ पानमा पनि खाने गर्छन्।

७- मूत्राधार पिशाब पोल्ने अथवा रक्तमेह रोगमा दूबोको जरा कुटेको आठ तोला पानी लगाएर पकाउनू ! चार भागमा एक भाग पानी रहेपछि उतारेर चीसो बनाई मह र चीनी अथवा मिश्री मिलाएर पिउनू ।

८- साधारण मूत्रकृच्छ्मा आधा तोला जराको रस निकालेर दहीमा फिटेर पिउनू । पिशावमा खून आउँछ भने मिश्री मिलाएर पिउनू ।

९– शुक्रमेहमा दूबोको रस, कुशको जरा, काँसको जरा, मजीठो र सीमलको जरा बराबर मिलाएर खस्रो कुटेर अढ़ाई तोला (दूई तोला आधी) आधा लीटर पानीमा पकाउनु। चार भागमा एक भाग रहेपछि उतारेर छान्नू। यो एक खुराक भयो, यसरी बनाई दुवै छाक खाने गर्नु।

१० – चिलाउने दाद आदि चर्म रोगमा यसको रसमा तीन भाग खाने तेल लगाएर पकाउनू। रस डढेर तेलमात्र रहेपछि त्यो तेल घस्ने गर्नु। या रस नाक भित्रसम्म पस्ने गरेर दुइ दुइ थोपा नाकमा लगाउने गरे नाकबाट पानी आउने रोग पनि जाति हुन्छ।

## 'खोकी'

१– खोकी धेरै प्रकारको हुन्छ, खोकी अनुसार उपचार गरे उत्तम हो। बातज खोकीमा कफ (खकार) आउँदैन, खोक्दा खोक्दा मुश्किलले खकार निस्कन्छ। खकार भित्र टांसिइरहेको हुन्छ।

२– हुपिंग कफ (सुखा खोकी) यो धेरजसो बालकहरूलाई हुन्छ, खोक्दा–खोक्दा हुरुक्क हुने गरी खोक्छन्। यसलाई कुकुर खोकी पनि भन्दछन्।

३– पित्तज खोकी–यसमा गलामा जलन हुनु, हल्का जरो आउनु, मुख सुक्नु तिर्खा लाग्नु, खोक्दा गर्मी लाग्नु, पहेंलो खकार आउनु आदि हुन्छ।

४– कफज खोकी, खकार पूरा निकल्नु, घाँटीमा खकार जम्नु, टाउको दुख्नु, घाँटी खसखसाउनु, खोक्दा बाक्लो खकार आउनु इत्यादि।

५– क्षतज खोकी, फोक्सोमा घाउहुनु, खकारमा खून आउनु छातीमा सियोले घोचे झैं चस चस घोचनु छात्ती दुख्नु जरो आउनु इत्यादि।

६– घोक्रोमा मासु बढेर झुण्डिएको खोकी बालकहरुलाई हुन्छ।

७– रुघा लाग्दाको खोकी नाकको पानी छातिमा गएर हुन्छ यस कारण रूघा लाग्दा अग्लो सिरानी लगाएर उत्तानो सुत्नु हानिकारक हो।

८– फोक्सोमा धुवाँ अथवा धुलो पसेर पनि खोकी लाग्छ। इत्यादि

खोकीमा याद राख्नु पर्ने कुरा :-

गर्मी को खोकीमा गरम औषधि र सर्दीको खोकीमा सर्दी औषधि दिनु हुँदैन। सुखा खोकी पुरानो भए कठिनले उपचार लाग्छ, खोकी लागेको मानिसले धूम्र पान गर्नु हुँदैन। खकार बेसी आउने खोकीमा माउरीको मह उत्तम हो तर मह जति पुरानो उत्ति राम्रो हो। महऔषधिमा प्रयोग गर्दा पुरानो मह प्रयोग गर्नु नयाँ ताजा काड़ेको महले लाभ गर्दैन। मह एक चम्मचमा ५-७ दाना गोल मरिचको धुलो लगाएर खानाले डाक्टर को पाँच खुराक ग्लाइकोडिन खएर लाभ गरेको भन्दा बेसी एक खुराकले नै काम गर्छ। सुखा खोकीमा दूधको तर र मिश्री बिहान उठेर खानु बेलुकी सुतने बेलामा घिउ र मिश्री खाएर सुत्नु।

## 'सबै प्रकारको खोकीको उपचार'

१- कचेडाको गेडा आधा आना भरी (अथवा एक डेढ़ ग्राम) पिपला दुवैलाई पिंधेर एक चम्मच महमा फिटेर खानु। खोकीको रामबाण औषधि हो। कचेडालाई कसैले गण्डमाला पनि भन्दछन् मारवाडीहरूले यसलाई रिङनी भन्दछन् यो बैगुनको बोट झै पातमा लामो तिखो काँडा हुन्छ गेडा पहेला हुन्छ काँचो गेडामा हरीयोमा सेतो धर्का बुट्टा झै हुन्छ पाकेका गेडा निचोरेर फुटाउँदा कोदोको जाँडको रंग भएको मसिनो गेडा हुन्छ। मदेसमा यो कित्र पनि पाइन्छ! यसको धुवाँ दाँतको किराको उपचारमा पनि पढनु होला यसको धुवा पिउनाले छातीमा टासिएको खकार निकाल्छ २-४ सर्का मात्र पिउनु धेर पिउनु हुँदैन ।

२- काकडा सिंगीलाई मसिनो पिंधेर छानी जंगली बैरको बराबरको गोली बनाउनु, बिहान बेलुकी एक एक गोली मुखमा राख्नु ।

३- मलद्वारको मुखमा घरी घरी खाने तेल लगाउने गर्नु, सुखा खोकीमा यो प्रयोग असल हो । बालकको खोकीमा रामबाण औषधि हो ।

४- अडुसेको बोक्रा दुइतोला डेढ़पावा पानीमा पकाउनु चार भागमा एक भाग पानी रहेपछि उतारेर छानीकन पिपलाको चूर्ण र एक चम्मच माउरीको मह मिलाएर खानु सबै प्रकारको खोकीमा लाभ गर्छ।

५- अडुसेको रसमा आधातोला अन्दाज मह मिलाएर सधैं खाने गरे सात दिनदेखि एक्काइस दिन भित्रमा धातुक्षय खोकी जाती गर्छ।सास बड़नेमा पनि लाभ गर्छ।

६- सुँठो, गोलमरीच, पिपला, मसिनो पाउडर बनाएर चार आना भरी यो पाउडर आधा तोला महमा मिलाएर खाने गरे कफको खोकी सांस बड़नेमा लाभ गर्छ ।

७- तोरीको तेलमा गुड पकाएर खानाले सुखा खोकी जाती गर्छ ।

८- चार तोला सिंधे नुनमा आकको दूध लगाएर पिंधनु र एक एक आना भरी (एक एक ग्राम) खाने गरे क्षयज (टी० वी०) को खोकीमा जाती गर्छ ।

९- कूचला (कुचले) तिन चाना डेढ़ तोला (अठार ग्राम) घिउमा डढाएर कोइला झैं बनाउनु र त्यो कोईला एक दुई लाल गेंड़ी भर अन्दाज पानीमा राखेर खाने गरे कफको खोकी जाती गर्छ ।

१०-अदुवाको रस आधा तोला माउरीको मह आधा तोला मिलाएर बिहान बेलुकी खानाले सास बड़ने रोग, खकार धेर आउने खोकी रूघाजाती गर्छ। कसै कसैलाई गर्मी लागे खुराक घटाएर खानु ।

११-काया फलको बोक्राको रस मह मिलाएर चाटनाले खोकी जाती हुन्छ।

१२-गोल मरिच, सुँठ(सुठो) पिपला, छोटा अलैंची (सुकमेल) एक एकतोल मिलाएर कुटेर बिहान बेलुकी एक एक अथवा आधा आधा तोला खाने गरे सबै प्रकारको खोकी र सास बढ़नेलाई लाभ गर्छ ।

१३-मुलेठी (जेठीमधु) गोलमरीच, मिश्री मिलाएर कुटेर चनाको दाना बराबर गोली बनाउनु सुत्ने बेलामा एक दुई गोली मुखमा राखेर सुते खोकी जाती हुन्छ ।

१४-दस पन्द्र दाना बेहड़े डड़ाएर खरानी चाटने गरे बुढ़ापाकाहरूको खोकी जाती गर्छ ।

१५-आधा तोला धतुराको जरा चिलीममा राखेर हुक्का झैं धुवाँ पिउनाले सबै प्रकारको खोकी हराउँछ ।

१६–सुखा खोकी कुनै औषधिले जाती भएन भने पाँच दस ग्राम अल्छी (अल्सी) को तेल पिउनु यो सुखा खोकीको लागी उत्तम औषधि हो ।

१७–कचेड़ाको गेडाको गुदी आधा लाल जती पानीमा घोटेर पिउनाले सुखा खोकी जाती हुन्छ भोली पल्ट देखीनै कफ निक्लेर रोग मुक्त हुन्छ। सुखा खोक्नेले रक्सी आदि कफ सुकाउने चिज खानु हुँदैन ।

१८–फिटकीरी पोलेर नानीको आमाले दूधको मुण्टो वरीपरी लगाएर बेलुकी सुतने बेलामा नानीलाई दूध चुसाएर सुताए नानीहरूको खोकी जाती हुन्छ ।

१९–गोलमरिच ४०–५० दाना एक तोला अन्दाज मिश्रीसंग एकैचोटी मुखमा लगाएर खुबै चपाएर निल्नाले कफ आउने खोकी तत्कालै जाती हुन्छ ।

२०–अदुवालाई नून लगाएर भुंग्रोमा पातमा अथवा कागजमा (युरपाक) तरिकाले पोलेर खाए खोकीमा लाभ गर्छ ।

२१–दूधमा बेसार पकाएर खाने गरे खोकीमा लाभ गर्छ ।

२२–मिश्रीको टुक्रा मुखमा राखी छोड़नाले खोकी कम हुन्छ ।

२३–सुखा खोकीको चाँड़ो औषधि नगरे टी० बी० (तपेदिक) को रोग हुन्छ।

## 'बाजत खोकी'

१–सुखा खोकीमा खकार छातीमा टाँसी रहन्छ निक्लन्दैन भने बिहान उठ्ने वित्तीकै दूधको तर र मिश्री मिलाएर खानु सुत्ने बेलामा खारेको गाईको घिउ अथवा नौनी घिउ मिश्री मिलाएर खानु सुखा खोकी जाती हुन्छ। अथवा अघि भनेझैं कचेडाको प्रयोग गर्नु मलद्वारको मुखमा तेल लगाउनु ।

२–पाकेको केरा एक कोसामा अलिकति बोक्रा हटाएर एउटा पिपला र पाँच दाना मरीच लाउनु र रातभरी छानामा अथवा सितमा राख्नु बिहानै उठेर बोक्रा ताछेर पहिला पिपला र मरिच झिकेर चपाएर तेसपछि त्यो केरा खानु वातज र पित्तज दुवै प्रकारको खोकीमा लाभ गर्छ ।

३–तुलसीको पात एक आना भरी अदुवा एक आना भरी ल्वाङ दुई आना

भरी अन्दाज गरेर बाल्ने कपूर यौटा चामलको गेड़ा जति सबै मिलाएर चपाएर खानाले बातज सुखा खोकी जाती गर्छ ।

४–पाकेको केरा एक कोसामा मिश्री, मह, अलिकती घिउ मिलाएर खानाले मुटुको रोग, सासको रोग र रक्तपित्तमा लाभ गर्छ ।

नोट :–घिउ र मह बराबर पार्नु हुँदैन ।

५–नानीहरूको कुकुर खोकीमा अदुवाको रस र मिश्री घिउमा पकाउनु अदुवाको रस डड़ेर घिउमात्र रहेपछि निकालेर तातो दूधमा एक एक चम्मच लगाउदै खाने गर्नु दुईचार पल्ट खाँदा रोग जाती हुन्छ ।

## 'पित्तको खोकी'

१–मुनक्का अमला, छुहरा (छोहडा) सबैका गेड़ा निकालेर प्याक्नु र तिनै चिज आधा तोला अन्दाज लिएर आधा पावा पानीमा पकाउनु एक चौथाई पानी रहेपछि झिकेर छान्नु र पिपला आधा दाना पाँच दाना गोल मरिचसंग चपाएर खानु यसरी बिहान बेलुकी खाए पित्तज खोकीको सबैभन्दा उत्तम औषधि हो ।

२–दाख एक तोला, मिश्री एक तोला, माउरीको मह एक तोला सबै एकै ठाउँमा पिधेर चाटने गरे पित्तज खोकी जाती हुन्छ ।

३–कचेराको फूलको पराग मिश्रीसंग पिंधेर खाए पित्तज खोकीमा विशेष लाभ गर्दछ ।

४–पहाड़को अलैंची (ठूलो अलैंची) भुङ्ग्रोमा पोलेर मह मिलाई खाए खोकी आराम हुन्छ ।

## 'कफको खोकी'

**( बाह्र ग्राम एक तोला, सोलह आनाको एक तोला )**

१–अदुवाको रस दुई तोला मह आधा तोला मिलाएर खाने गरे कफ बेसी

आउने खोकी जाती गर्छ । रूघा र दम बढ्ने रोगीलाई पनि लाभ गर्छ। यसमा अलिकता नून पनि मिलाएर खाए हुन्छ ।

२–पिपला र जंगी हर्रो (सानुहरडा) चिलीममा राखेर धूवाँ पिउनाले पनि कफ बेसी आउने खोकी जाती गर्छ ।

३–मुलेठी (जेठीमधु) र गोल मरिच बराबर मिलाएर तातो खरानीमा पोल्नु र मिश्रीसंग पिंधेर अलिकता पानि लगाएर चनाको दाना झैं गोली बनाउनु यो गोलि मुखमा राखेर चुसी बसनाले खकार बेसी आउने खोकी जाती गर्छ ।

४–केराको पात डढाएर खरानी बनाउनु र त्यो खरानीमा अलिकता नून मिलाई घरि घरि चाटनाले कफ आउने खोकी आराम हुन्छ ।

५–दुइ रातीगेडी जति पोलेको सुहागा (सुन बिलाउने) पानिमा राखेर खाने गरे कफ बर्ता आउने खोकीमा लाभ गर्छ ।

६–अमिलीको दुइ तोला पात डेढ़ पाउ पानीमा एक चौथाई रहने गरी पकाएर छान्नु र दुई लाल जति हिंग र चार आना भरी नून मिलाई पिउनु कफ आउने खोकीको रामबाण औषधि हो ।

७–दुइ आना भरी पिपला धूलो पारेर आधा तोला मह मिलाई चाटनाले कफ आउने खोकी निको हुन्छ ।

८–एक तोला अथवा आधा तोला अदुवाको रसमा विरेनून मिसाई पिउनाले खकार (कफ) बेसी आउने खोकीमा लाभ गर्छ ।

९–भाँगको जराको बोक्रा डढ़ाएर कोइला बनाउनु र पिंधनु र एक आना भरी (डेढ ग्राम) अन्दाज विरेनून अथवा मह मिलाएर चाटनु कफको खोकी जाती हुन्छ साथै छाती दुख्ने रोगबाट पनि मुक्त हुन्छ ।

१०–अदुवालाई चिया जस्तो पकाएर दूध र चिनी मिलाएर चिया झैं पिउनाले रूघा सर्दीको खोकी जाती हुन्छ ।

११–अदुवाको रस गरम गरेर मिश्री मिलाएर पिउनाले रूघा जाती गर्छ ।

१२–अमलतासको चार तोला रसको काढ़ा बनाएर पिउनाले कफको खोकी

जाती गर्छ । खकार धेरै आउने लाई कफको खोकी बुझ्नु ॥

नोट :-काढा आदि जति पानीमा औषधि पकाइन्छ त्यो पानी सुकाएर एक चौथाई अथवा चार भागमा एक भाग पानी रहनुलाई भनिन्छ । पानी जति सुकाउन सकिन्छ उति राम्रो ॥

## 'क्षत्तज खोकी'

१-उखुको रस घिउमा पकाएर खाने गरे क्षतज खोकी जाती गर्छ ।

२-तीन चार आना भरी पिपला पिंधेर मह मिलाएर चाट्नाले उरक्षत या क्षतज खोकीमा लाभ गर्छ ।

३-सुखा खोकी टी० वी० तपेदिकको घर हो ।

## 'घरकै चीजद्वारा खोकीको उपचार'

१-घिउ र गोलमरिचको धुलो मिलाएर अथवा मिश्री पनि मिलाएर चाटनाले सुखा खोकी जाती गर्छ ।

२-गाईको घिउ छातीमा घसेर सुकाउनाले दूधको दोषले भएको खोकी जाती गर्छ ।

३-गाईको मूत पकाएर भाँड़ाको फेदमा रहेको खार निकालेर सधैं खाने गरे दस दिनमा खोकी जाती गर्छ ।

४-गुड़, सुठो, गोलमरिच मिलाएर खानाले रूघा खोकीमा लाभ गर्छ ।

५-आधा तोला गुड़ र आधा तोला तोरी (सरसों) को तेलमा मिलाएर खानाले वातज खोकीमा लाभ गर्दछ ।

६-मिश्रीको टुक्रा मुखमा खेलाई बसनाले खोकी कम हुन्छ ।

७-मह, सुठो, गोलमरिच मिसाई खानाले कफ आउने खोकी जाती गर्छ ।

८-चार आना भरी मह, आठ आना भरी घिउ मिसाई खाने गरे खोकी निको

हुन्छ ।

९–दुई तोला तिल एक पाउ पानीमा पकाउनु र चौथाई भाग रहेपछि छानेर सहँदो तातो पिउनू खोकी निको हुन्छ ।

१०–एक तोला अलसी एक पाउ पानीमा पकाउनु, चौथाई रहेपछि छानेर एक तोला मिश्री मिलाई पिउनु, सुखा खोकी जाती गर्छ ।

११–तावामा अलसी भुटेर मह मिलाइ खानेगरे सुखा खोकी हराउँछ ।

१२–गोलमरिच पिंधेर गुड़ (सखर) मिलाई खानाले रूघा, खोकी र पिनास समेत निको हुन्छ ।

१३–गोलमरिच पिंधेर मह मिलाई चाटनाले खोकी, सर्दीको खोकी र रूघा लागेकोमा लाभ गर्छ ।

१४–हर्दी (बेसार) भुटेर मह मिसाई छिन–छिनमा चाटनाले खोकी र दम बढ़नेमा लाभ गर्दछ ।

१५–ल्वाङ्ग र कत्था (खयर) पिधेर गोली बनाई मुखमा राख्नाले खोकीमा विशेष लाभ गर्छ ।

१६–सुठो पिंधेर गुड मिसाई खानाले रूघा खोकीमा लाभ गर्छ ।

१७–पानको रसमा मह मिलाएर चाटनाले कफको खोकीमा लाभ गर्छ ।

१८–हर्दी पानीमा पिंधेर तताई शिरमा लगाउनाले पनि रूघा र खोकीमा लाभ गर्दछ ।

१९–अदुवाको टुक्रा पारेर नून मिलाएर पात अथवा कागतमा पोको पारेर आलू झैं केही बेर पोली निकालेर खाए खोकीमा लाभ गर्दछ ।

२०–नानीहरूको खोकीमा तोरीको तेल तताएर छातीमा मलनाले कफ पातलो भएर निस्कन्छ ।

२१–गाईको तातो दूधमा गोल मरीच मिलाएर खानाले रूघाको खोकीमा अवश्य लाभ गर्दछ ।

२२–चालीस पचास दाना मरीच एक डल्ला मिश्रीसंग फाँको लगाएर खूबै

चबाउनु र निल्नु खकार धेरै आउने खोकी तुरुन्तै जाती गर्दछ ।

## 'बालकहरूको खोकी'

१–नौसादर (सुन उज्यालने) एक लाल गेडी भरी पिपलाको धूलो एक लाल भरी दुवैलाई एकै ठाउँ पिंधेर तुलसीको पातको रससंग मनतातो पारेर खुवाउनु बालकको खोकी र सास जाती गर्दछ ।

२–यदि बालकको छातीमा सर्दी जमेको भए अलिकता सेतो पियाजमा तोरीको तेल हालेर पकाउनु र त्यो तेल छातीमा मलिदिनु । कफ जमेको भए पातलो भएर निस्कन्छ । अदुवाको रस तेलमा डढाएर घसिदिए पनि हुन्छ, मालिश हलुका हातले गर्नुपर्दछ । बोझो घोटेर आमाको दूधमा मिलाई ख्वाए कफ सजिलै निस्कन्छ ।

३–अदुवाको रस निचोरेर घिउमा लगाएर पकाउनु, रस डडेर घिउमात्र रहे पछि तातो दूधमा मिलाउदै दिनमा ३–४ पटक खुवाउनाले कुकुर खोकी जाती हुन्छ। यसमा मिश्री पनि लगाएर दिनुपर्दछ । यो खोकीले बालक बालिकाहरू हुरूक्कै हुन्जेलसम्म खोकेको खोकेकै हुन्छन् । यो खोकीलाई एक दुइ दिनमा नै जाती गर्दछ।

४–आधा पाउ गाईको दूधमा आधा पाउ पानी मिलाएर एक चम्मच गाईको घिउ लगाएर पकाउनु, पानी डढेर दूध मात्र रहेपछि मिश्री मिलाएर दिनाले बालकहरूको पुरानो कुकुर खोकी जाती हुन्छ । दुइ चार पल्टमा नै पूरा लाभ देखाउँछ ।

५–बड़ा हरड़ (हर्रो) को बोक्रा, दारीमको बोक्रा (रूखको होईन) मिलाएर काढ़ा बनाउनु, जव लिटो जस्तो हुन्छ पिपला पिंधेर मिलाउनु । यो बालकको उमेर अनुसार अलि अलि चटाउने गरे कुकुर खोकी जाती गर्छ । अरू खोकीको औषधि रूघाको उपचारमा हेर्नु होला ।

## 'रूघा'

रूघा मानिसहरूलाई सर्दीले धुलोले नराम्रो फोहोर गन्ध आदिले हुन्छ । रूघा लाग्दा तातो पानी पिएर सुत्नु असल हो सुत्ने बेलामा उमालेको पानी फुक्दै तातोतातै

पिउनु ।

१-रूघामा तेजपात,दालचीनी, अलैंची, नागकेसर बराबर मिलाएर नस बनाएर सुङ्नु ।

२-बोझो सुङ्नाले पनि लाभ गर्छ । यसको धुवाँ सुङ्नाले पनि लाभ हुन्छ बोझो सिमसारमा हुन्छ तरबार झैं दुई पट्टी धार भएको बोट हुन्छ हिन्दीमा यसलाई बच भन्दछन् ।

३-रूघामा पुरानो रक्सी पिएर सुत्नाले लाभ गर्छ ।

४-गुड र अदुवाको रस मिलाएर खानाले रूघा जाती हुन्छ ।

५-कलौजी अथवा काला जीरा लुगामा बाँधेर माड्दै सुङ्नाले लाभ गर्छ ।

६-सुठो, पिपला, गोलमरिच तीनैवटा बराबर पिंधेर त्यसको चार गुणा गुड मिलाएर मटरको दाना बराबरको गोली बनाउनु र खाने गर्नु टाउको भारी हुनु आदिमा लाभ गर्छ ।

७-अदुवाको रस आधा तोला, मह आधा तोला मिलाएर खाने गर्नु ।

८-यौटा रुमालमा कपूर र पिपरमेन्ट मिलाएर लगाउनु यसो गर्नाले सत्य जीवन अथवा भिक्स हुन जान्छ यसलाई सुङ्नाले लाभ गर्छ ।

९-मरिच तातो पानीमा पकाएर पिउनाले लाभ गर्छ ।

१०-ल्वाङ पिंधेर तालुमा लगाउनाले रूघामा लाभ गर्छ ।

११-बाल्ने कपूर फिटकेरी बराबर मिलाएर धुलो पारेर नस सुङ्नाले लाभ गर्छ ।

१२-गोल मरिचको काढ़ा पिउनाले रूघामा लाभ गर्छ ।

१३-तुलसीको पातको चिया बनाएर नून लगाएर पिउनु रूघामा लाभ गर्छ।

१४-कचेड़ाको गेडा एक आना भर पानीमा लगाएर काड़ा बनाएर पिउनु ।

१५-मह र अदुवाको रस मिलाएर नुहाउने पानी जतिको गरम बनाएर पिउनु अदुवाको गुण दोस्रो भाग घरेलु औषधिमा पढनु होला ।

१६–बेलुकी सुत्ने बेलामा ज्वानोको काढा बनाएर पिएर सुत्नु ।

१७–काफलको नस सुङ्गनु ।

१८–नसेझार माड़ेर सुङ्गनु ।

१९–रूघामा उत्तानो सुत्नु हुँदैन खोकी लाग्छ ।

## 'रूघाको उपद्रवमा'

१–छाती दुख्नेमा नारायण तेल छातीमा मल्नु ।

२–तोरीको तेलमा गरम गरी अलिकता नून मिलाएर छातीमा घसनु ।

३–अलसीको तेंलमा नून मिलाएर गरम गरी छातीमा घसनु ।

४–तारपिनको तेल छात्तिमा घसनु ।

५–पिपला, पिपलामूल, चिता, चाव्य, सुठो यो पाँच चिज मिलाएकोलाई पञ्चकोल भनिन्छ । यसको काढ़ा बनाएर पिउनाले रूघा लागेर छाती दुखेको जाती गर्छ ।

## 'खोकी'

१–रूघा लाग्दा खोकी लाग्छ आँकको पात तोरीको तेलमा चोपेर तताएर रोगीको छातीमा बाँधनु ।

२–आँकको बोटको जरा डढाएर आधा आधा आना भरी नून मिलाएर चाटनाले रूघाको खोकी जाती गर्छ ।

३–अम्बक भुंग्रोमा आलु झैं पोलेर नून मिलाएर खानाले रूघाको खोकी जाती गर्छ ।

४–पिपला र बडड़ा अलैंचीको वियाँ पिधेर एक आना भरी मह मिलाएर दिनमा ४–५ पल्ट चाटने गरे रूघाको खोकीमा लाभ गर्छ ।

५–त्रिफला ल्याएर चार आना भरीको मात्रा (खुराक) मह मिलाएर चाटनु

रूघाको खोकी जाती गर्छ ।

६–रूघाको खोकीमा मुनक्काको बियां फ्याकेर मिश्री र मह बराबर मिलाएर पिंधनु र चाटने गरे पुरानो रूघा खोकी जाती गर्छ ।

७–रूघा लागेको कारणले गला बसेको भए पानको रस संग तोरीको दाना पकाएर गलामा बाँधनु । अथवा मलनु र अलिक गरम पानीमा नून मिलाएर पिउनु।

## 'रूघामा टाउको दुखे'

१–रूघा लागेर टाउको दुखे, भारी भए, सर्दी भए भुटेको दाल पुङको अथवा भुटेको चना, सुङ्नु चना भुटेको तातो तातोले टाउको सेकनु यस प्रकारले रूघा लागेर दुखेको टाउको हल्का हुन्छ ।

२–पानमा खाने चुना अलिकता र सुन उज्यालने नौसादर अलिकता एउटा राम्रो कर्क (बिरको) भएको सिसीमा लगाएर हल्लाउनु र अलि अलि एकहोरो सुगी रहनु रूघा लागेर दुखेको टाउको जाती गर्छ । प्रेत लागेर बौलाएकोलाई ताजा बनाएर मुख बन्द गरी नाकमा ठुसी जबरजस्ती सुगांई दिनाले प्रेत भाग्छ ।

३–सुठो, गोलमरीच, पिपला, तोरी बराबर पिंधेर नस बनाउनु र सुङ्नाले छिक द्वारा कफ निक्लन्छ र टाउको दुख्न जाती गर्छ ।

४–पुरानो रूघा लागेर टाउको दुखेकोमा त्रिफलाको काढ़ा पकाएर मह मिलाएर खानु अथवा २ नम्बरमा लेखेको उपचार गर्नु ।

५–खोकी बेसी लागेर टाउको दुखेकोमा, अडुसको काड़ामा मह मिलाएर खानु ।

६–पुरानो खोकीमा एकतोला अजमोदा (ज्वानो मसला अफीमको खेतीमा लगाएको) मसिनो पिसेर आँकको छिपिएर आफै झरेको पातमा लिपनु र फलामको ताबामा राखेर माथिबाट थालले छोपी दिनु र चुल्हामा बसाएर आगो फुकनु जब रोटी डढ़े झैं पूरा डढ़छ झिकेर त्यो डढ़ेको खरानी आधा दाना भरी अन्दाजले चाटने गर्नु ।

७-कुनै बीमारीको घोक्रोमा खकार जमेर घर्र-घर्र गर्छ र बिमारी सारो भए माउरीको मह पुरानो अलि अलि खुवाई दिए कफ हराउँछ । कफ सासको नलीमा भरीए बीमारी बचाउन कठीन पर्छ यस कारण झट्टै माउरीको मह खुवाई दिनु सास बढ़े मुजुरको प्वाख डड़ाएर खुवाउनु ।

## 'सास बढ़ने रोग'

१-सास बढ़ने रोग पाँच प्रकारको हुन्छ सबै वर्णन नलेखेर सरल उपचार हरू मात्र लेखिन्छ । सास बढ़ने रोग हुनेहरूले जति सक्दो पानी कमती पिउनु । खानाको साथमा पानी नपिएर १-१ घण्टा पछि पानी पिउनु असल हो । पानी तातो, कम मात्रामा पिउनु । खकार बेसी भएर सास बढ़ेकोमा अदुवाको रस आधा तोला र मह आधा तोला मिलाएर चाटनाले लाभ गर्छ। बालकहरूको त सधैंको लागि जाती हुन्छ। यो औषधि सासको रोगीलाई उत्तम हो ।

२-गुड़ एक तोला तोरीको तेलमा खुबै फिटेर साठी दिनसम्म लगातार चाटनु रोगको जरै समेत जान्छ ।

३-अरिठेको गुदी एक तोला सँधै १०-१५ दिन खानाले रोग हराउँछ ।

४-बेलको पातको रस, अडुसेको पातको रस आधा आधा तोला (छ ग्राम) र तोरीको तेल आधा तोला मिलाएर १० दिन लगातार पिउनाले जस्तै सास बढ़ने रोगबाट पनि मुक्त हुन्छ ।

५-दश मूलको काढ़ामा पोहकर मुक्तको चूर्ण मिलाएर खानाले रोग मुक्त हुन्छ ।

६-एउटा आकको पात र पचिसवटा गोलमरीच पिंधेर दालका दाना बराबरको गोली बनाउनु बिहानै जवानलाई छ गोली, बालकलाई उमेर अनुसार घटाएर एक गोली सम्मको मात्रा (खुराक) दिनाले रोग मुक्त हुन्छ ।

७-आगोमा फुलाएको फिटकेरी दुइतोला, मिश्री दुइतोला पिंधेर बिहान बिहान चार चार आना भरीको खुराक खाने गरे दम (सास) बढ़ने रोग जाती गर्छ ।

८–वारहसिंगे मृगको सिंग डढाएर खरानी बनाउनु यसबाट एक आनाभर सिंग डढेको खरानी चार आनाभरी मह मिलाएर खानू यसरी खाँदा दिनहूँ एक एक आना भरी मह र खरानी दुवै बढाउदै बारह दिनमा बारह आना भरी बढ़ाएर खानु । बारह दिन पछि मात्रा बढ़ाउनु पर्दैन रोग जाती हुन्छ ।

९–पिपला, पोहकर मुल, मह मिलाएर चाटनाले सासको रोगमा लाभ गर्छ।

१०–गोलमरीच र हरदी (बेसार) बराबर पिंधेर चार चार आना भरीको खुराक चार आना भरी मह र चार आना भरी मिश्री मिलाएर खाने गरे सबै प्रकारको सास रोगलाई लाभ गर्छ । साथै भुँड़ीको रोगलाई पनि लाभ गर्छ ।यो सास बढ़ने रोगीलाई सरल उपचार हो ।

११–नीमको बियाँ कदमको बियाँ केहि मात्रामा पिंधेर मह संग चाटनु र माथिबाट चामलको चौंलानी पिउनु पर्छ ।

१२–आमको (कलीलो) नरम नरम पातको रस निकालनु र त्यो रसमा जौ भिजाउनु र सुकाउनु र सातु बनाउनु त्यो सातु महमा मिलाएर खानाले सास बढ़ने रोग जाती हुन्छ ।

१३–आँकको छिपिएर आफै झरेको पात एक सेर ल्याएर पानमा खाने चूना एक तोला र एक तोला सिंधेनून पिंधेर पातको दुवै पट्टि लिप्दै छाँयामा सुकाउनु र त्यो पातलाई एउटा ढकनी भएको हाँडीमा लगाएर हावा न जाने गरी माटो मुछेर लिपनुर सुकाउनु केहिं हावा जाने शंका भए फेरि माटो थपेर लिपनु फेरि सुकाउनु र सुकेको गोबर दुई तीन डोको थुपारेर हाडीलाई विचमा राखेर आगो लगाउनु। आगो बली सबै गोबर खरानी भएपछि हांडी झिकेर सेलाएर पछि खोलेर हाडी भित्रको खरानी झिकनु। यसलाई आकको भष्म भनिन्छ यो आकको भष्म एक गेडी भरी सधैं खाने गरे सास बढ़ने रोग जाती हुन्छ ।

१४–कचेडाको गेडा र अमला बराबर मिलाएर पिधनु त्यसमा एक आना भरी हिंग पनि मिलाएर पिंधनु औषधि तयार भयो यसबाट एक एक आना भरी महमा मिलाएर चाट्नाले सास बढ़ने रोग जाती हुन्छ ।

१५–सुन बिलाउने सुहागा तीन तोला आगोमा फुलानु र त्यो फूल पिंधेर च तोला महमा मिलाएर राख्नु । सधैं चार चार आना भर अन्दाज गरेर सुत्ने बेल बेलुकी चाटने गरे पन्द्रह बीस दिनमा दम (सास) बढ्ने रोग जाती हुन्छ ।

१६–कायफलको बोक्राको रसमा रायो मिलाएर खानाले लाभ गर्छ ।

१७–कचेडाको जरा दुई तोला कुटेर एक पाव पानीमा पकाउनु चार भाग म एक भाग रहेपछि निकालेर लुगामा छान्नु, छोक्रा फ्याकेर फिटनु पाएमा त्यसमा एव चम्मच मह पनि मिलाएर पिउनु निर्धन (मरीज) को लागि अति नै सरल र उपका औषधि हो ।

१८–एक लाल गेडी भरीको ओजन माकुराको जालो गुड मिलाएर खानु य औषधि खाँदा गर्मी ज्ञात भए नडराउनु सास बडने रोगको रामबाण औषधि हो ।

१९–मुजुरको प्वाख डढाएर मह मिलाएर खानाले लाभ गर्छ ।

२०–कुरकुरे झार (सल्ली विसल्ली) (बरकुले) नेपालीमा यो झारको धे नाम छ यसझारलाई कुटेर एक चम्मच रसमा मह मिलाएर एक खुराक हुन्छ यसर नै बनाउदै दिनमा तीन खुराक बिहान दिउसो र बेलुकी खाने गरे सास बढ्ने रो (एज्मा)२०–२५ दिनमा नै जरैबाट जान्छ । यो रामबाण औषधि हो केहि जाति भय भनेर औषधि खान बीचमा छोड्नु हुँदैन । यो झारको नाम हिन्दीमा सोमकल्पलत भन्दछन् । नानीको सास बढ्नेमा धनिया र मिश्री चामलको चौलानीमा यो झा पिंधनु र कपड्छान गरेर दिने गर्नु ।

२१–कालो जिरा चपाएर यौटा चमचमा थुकनु र अलिकता हरदे (बेसार)मिलाएर नानीहरूलाई खुवाए लाभ गर्छ ।

२२–गोलमरिच, केसर, ल्वांग, बराबर मिलाएर पिंधनु त्यो चूर्ण पानको रसमा मिलाएर मुङको दालको बराबरको गोली बनाउनु र आमाको दूधमा एक दुई गोली घोटेर खुवाउने गर्नु ।

२३–अदुवाको रस र मह बराबर मिलाएर घरि घरि चटाउनु । यसले घेरैको दम बढ्नेमा लाभ गरेको छ ।

# दमको खोकीमा

१-दमको रोगी सामर्थ भएकाहरू धेरै सुतनु हुँदैन ।

२-रक्सी पिउने बानी भएकाहरूले पतला र कम्ती पिउनु आदत नहुनेले हुदैन ।

३-खस्रो लुगाले छाती मल्ने गर्नु ।

४-दमको रोगीले काममा लागी रहनु उत्तम हो ।

५-कुनै पनि बेसी पिसाव आउने औषधि अथवा खानादेखी बचनु ।

६-आँकको पातको बिचको टुसा डेढ़ तोला, ज्वानो एक तोला दुवैलाई पिंधेर ई तोला गुड़मा मिलाउनु र दुई दुई आना भरीको गोली बनाउनु र राख्नु र बिहान न एक एक गोली खाने गरे रोगबाट चाँड़ै मुक्त हुन्छ ।

७-बीमारी सारो भएर घोक्रोमा कफ घर घर गरे मह खुवाउनु (चटाउनु) ।

८-सास बड़ने रोगी बसी रहनु हुदैन हिड़डुल गर्नुपर्छ ।

## 'बाडुली'

१-हाडुली लागेर मानिसलाई झुटा कुनै आरोप(फतुर) लगाउनाले मन अर्कोतिर र बाडुली जाती हुन्छ ।

२-नस सुङाउनु, जुलाप दिनु, खुवाउनु, रिस उठाउनु, खुशी हुने कुरा सुनाउनु, पार्नु आदि उपायहरू गर्नु असल हो ।

३-बिमिराको रस दुई तोला आधा तोला मह, चार आना भरी बिरेनुन (कालोनून) एर पिउनाले बाडुली जाती हुन्छ ।

४-काँसको जराको चुर्ण बनाएर मह मिलाएर चाटनाले असाध्य बाडुली हुन्छ ।

५-एक पावा बाख्राको दूधमा दुई तोला सुँठ र एक सेर पानी मिलाएर पकाउनु घटेर दूध मात्र रहेपछि छानेर पिउनु ।

६–आधा तोला घिउकुमारी (ग्वारपाठा) को रसमा एक आना भरी सुँठको चूर्ण बनाएर मिलाई चाटनाले तत्कालै बाडुली बन्द हुन्छ ।

७–बडा अलैंचीको धुलो चिनी मिलाएर खानु बाडुली बन्द हुन्छ ।

८–केराको जराको रसमा चिनी मिलाएर खानु साथै सुङनु ।

९–हरड़ाको चूर्ण तातो पानीसंङ्ग खानु ।

१०–बाडुली लाग्नासाथ चिसो पानी पिउन ।

११–ताततातो गाईको दूध पिउनु ।

१२–दुई आना भरी चटनी खाने पुदीना चिनी मिलाएर खानु ।

१३–नरीवल र चिनी मिलाएर खानाले केटा–केटीको बाडुली जाती हुन्छ ।

१४–मुलेठी (जेठी मधु) र मह अथवा पिपला र मिश्री मिलाएर अथवा सुँठ र गुड यसमा कुनै पनि सुङनाले बाडुली जाती हुन्छ, तर सुङ्गी बस्नु पर्छ ।

१५–हिंग र कालोदाल पिंधेर धुवाँ नभएको झरीलो आगोमा लगाएर त्यस्को धुवाँ सुङ्गी बस्नु। बाडुली जाती हुन्छ ।

१६–सेतो चन्दन स्त्रीको दूधमा घोटेर सुङनु बाडुली जाती हुन्छ ।

१७–भेडा अथवा बाख्राको पिशाब सुङनाले बाडुली जाती गर्छ ।

१८–घिउ आधा तोला मन तातो पारेर पिउनाले पनि लाभ गर्छ ।

१९–कुनै पनि माथिको औषधि एक छिन मात्र सुङनु होइन सुँङी रहनु पर्छ।

## 'रक्तपित्त रोग'

१–यो रोगमा मुख, नाक कान लिंग, योनि अथवा शरीरको कुनै पनि भागबाट रगत आउछ । मुखबाट रगत आए खून छाद्यो, नाकबाट गए नाथ्रो फुटयो, योनीबाट गए रक्त प्रदर, लिंगबाट ग... पिशाबमा खून गयो आदि भन्छन् तर रक्तपित्त रोग हो भन्ने कम्तीलाई नै थाहा हुन्छ । तर यहा साधारण उपचार दिइन्छ ।

२–दुबो झारको रस, दारीमको रस, गोबर अथवा घोडाको लिदीको रस

मिलाएर पिउनाले खून बग्न बन्द हुन्छ ।

३–एक डेढ़ आना भरी (फटकेरी) धुलो पारेर एक गिलास गाईको दूधमा मिलाएर पिउनाले पिशाबमा खून जानु तुरुन्तै बन्द हुन्छ। यो उपचार लिंगबाट मुत्रझैं खून आउनेलाई जादूको काम गर्छ ।यो औषधि खुवाउनु भन्दा अघि पिशाब बेसी आउने औषधि जस्तै धनिया पानीमा २–४ घण्टा भिजाएर चियाको रंग झैं आएपछि मिश्री मिलाएर पिउनु । चन्दन पानीमा घोटेर मिश्री मिलाएर पिउनु अथवा कुनै पिशाब बेसी हुने औषधि दिनु यसो गर्नाले पिशाबमा मिलेर खुन पतला भएर निकलनु थाल्छ र माथि लेखिएको औषधि दिनु, पिशाब पतला नपारि दूध र फटकेरी दिनाले खून लिंगको नलीमा गाँठो पर्ने 'डर हुन्छ' यसले धेरै रोगी एक खुराकलेनै जाती भएका छन् ।

४–चिनी मिलाएरको दूध नाकबाट नस झैं भित्रसम्म पुग्ने गरी लगाएर नाकबाट खून आउन बन्द हुन्छ ।

५–दारीमको फूलको रस नाकमा भित्रसम्म पुग्ने गरी चुवाउनाले खून आउन बन्द हुन्छ ।

६–आपको कोयाको रसमा हरडा भिजाएको पानी नाकमा लगाउनाले नाकबाट खून आउन बन्द हुन्छ ।

७–दूध र घिउमा मिश्री मिलाएर अथवा उखुको रसमा मिश्री मिलाएर पिउनु नाकबाट खुन आउन बन्द हुन्छ ।

८–पानीमा मिश्री मिलाएर नाकबाट पिउनाले पनि नाकबाट खून आउन बन्द हुन्छ ।

९–खुनको फाल्सा फाल्सै आउँछ भने अलिकती परेवाको सुली र मह मिलाएर चाटनु ।

१०–एक सय आठ पल्ट मखन घिउ धोएर अलिकती कपूर (बालने) पनि मिलाएर तालुमा लगाउनु खून बग्ने बन्द हुन्छ ।

११–आधा तोला बन्दाकोभी (काउली) को पात पानीमा पिधेर पिउनाले

उल्टी खून बन्द हुन्छ ।

१२–एक अथवा दुई लाल अफिम खानाले खकारमा खुन आउन बन्द हुन्छ।

१३–चिसो पानी पिउनु चिसो पानी तालुमा लगाउनु यसरी पनि खुन बन्द हुन्छ ।

१४–इसबगोल सिर्कामा भिजाएर तालुमा लगाउनु ।

१५–नाक भित्र पुग्ने गरेर गाईको घिउ टपकाउनाले पनि लाभ गर्छ ।

१६–कालो दालको पिठो मुछेर तालुमा राख्नाले पनि लाभ गर्छ ।

१७–माजी (माजुम) फलको नस बनाएर सुङ्नाले पनि लाभ गर्छ ।

१८–कलचुडा, (कचेडा) को पात कुटेर रस नाकभित्र चुवाउनाले साथै तालुमा लगाउनाले पनि लाभ गर्छ ।

१९–केराको बोटको रस नाक भित्रसम्म पुग्ने गरी लगाउनु ।

२०–अमला भिजाएर पिधनु र तालुमा लगाउनु ।

२१–गाईको सुकेको गोबरको नस बनाएर सुङ्नु ।

२२–गाई अथवा बाख्राको सिंग डढाएर सुङ्नु ।

२३–गधाको ताजा लिदी निचोरेर नाकमा टपकाउनु । अथवा डढाएर नस सुङ्नु ।

२४–सुकेको गोबर डढाएर नस सुङ्नु ।

२५–निमको पात र ज्वानो डढाएको खरानी नस सुङ्नु ।

२६–ढाकको फूलको अष्टमांस काडा बनाएर मह मिलाएर पिउनाले फाइदागर्छ।

२७–माटो, दुबो, अमला, पिधेर तालुमा लगाउनाले झट्टै लाभ गर्छ ।

२८–नरीवलको पानी पिउनाले रक्त पित्तको खून आउन बन्द हुन्छ ।

२९–अडुसको काढामा मह मिलाएर पिउनाले रक्तपित्त रोगमा झट्टै लाभ गर्छ।

३०–यदि कुनै उपायले रक्त बग्न बन्द भएन भने बाख्राको खूनमा एक तोला

मह मिलाएर पिउनु अथवा अरू नै प्राणीको खून भए पनि हुन्छ । कुखूरा, परेवा जेराकैको खूनले पनि काम लिन सकिन्छ ।

३१-मलद्वारबाट खून गए रगत मासीको उपचार गर्नु, योनीबाट खून गए प्रदरको उपचार गर्नु, लिंगबाट खून गए फटकेरी प्रयोग गर्नु । या रक्त प्रमेहको उपचार गर्नु ।

३२-फिटकेरीको पानी नाकमा भित्रसम्म पुग्नेगरी लगाए नाकबाट खून आउन बन्द हुन्छ ।

३३-एक दुइ लाल अभ्रक भष्म, छोटा अलैंची, मिश्री, हरडालाई गुडसंङ्ग मिलाएर खानाले रक्तपित्त रोग जाती हुन्छ ।

३४-बाख्राको दूधमा केसर उमालेर खानु माथिबाट दूधभात खानु यसो गर्नाले रक्तपित्त रोगबाट छुटकारा पाउँछ ।

३५-सेतो कमलको टुसा (अंकुर) मह मिलाएर खाने गरे रक्त पित्त रोगमा लाभ गर्छ ।

३६-उखूको रस एउटा माटोको हाँडीमा लगाउनु रसको बराबर पानी लगाउनु, सेत कमलको फूल त्यसमा हालेर रातभरि सितमा राख्नु अथवा बाहिर छानामा राख्नु बिहान उठनेबित्तीकै छानेर (चालेर) पिउने गरे रक्तपित्त रोग जान्छ ।

३७-दूधमा बराबरी पानी मिलाउनु र सयपल्ट सारफेर गर्नु र पिउनु लाभ गर्छ।

३८-बंशलोचन (बाँसमाहुने) मिश्री र मह मिलाएर चाटनु ।

३९-कमलको खरानी मह मिलाएर चाटनु ।

४०-उँधो पट्टिबाट खून बग्नेमा बरको दूध चार पाँच थोपा दिनभरीमा चारपल्ट अलि अलि पानी मिलाएर पिउने गरे रोग मुक्त हुन्छ ।

४१-रक्तपित्त रोगमा बाख्राको दूध खाने गरे उत्तम औषधि हो ।

# 'अम्लपित्त'

१-यो रोगमा विशेष पित्त कुपित हुन्छ । अमिलो डकार आउनु मुटु छाती, घोक्रोमा जलन हुनु,खाएको अन्न नपचनु, जिउ मिचलाउन(सिये लागेको भन्दछन्)जिउ गह्रौं हुनु, अरुची अथवा अमन हुनु रोगको लक्षण हो । यो रोग ऊर्ध्वंग र अधो गामी दुई प्रकारको हुन्छ ।उर्ध्वगमा खाएको छादेर दूषित पदार्थ निकलन्छ अधोगामीमा पखाला लान्छ । वैद्यले यसमा धोका खान्दन् । अम्लपित्त रोगलाई साधारण पखाला सम्झनु, उल्टी हुँदा साधारण छादनु सम्झनु भूल हुन जान्छ । यो रोगको उपचार चाँडो नभए असाध्य हुन जान्छ । यसले वातज, पित्तज, कफज, त्रिदोष इत्यादि अनेक उपद्रव गर्न सक्छ। यो सबै वर्णन नगरी साधारण उपचार दिइन्छ, अमल पित्तमा वात र पित्तको संगम पनि हुन सक्छ। १ औषधि र पथ्य अपथ्य राम्रो विचार गर्नु योग्य छ ।

१-सुठो र पर्वल (पटोल) को काढ़ा यो रोगमा पाचक र दीपन हुन्छ । यसले कफ, पित्त, उल्टी,,चिलाउने, पोलने जरो र घाउ खटिरामा लाभ देखाउँछ।

२-उधोबाट जाने अमल पित्तमा रगत मासी अथवा पखालाका औषधि गर्नु।

३-सुनुहर्रा (जंगीहर्रा) अथवा ठूलो हर्रा (हरड़ा) को चूर्ण खानाले अम्ल पित्त रोग जान्छ ।

४-बेलुकी ज्यामीरी निबूको दुई तोला रस पिउने गरे रोगमुक्त हुन्छ ।

५-अमला को रससंङ्ग सधैं खाना खाने गरे अम्लपित्त रोग हराउँछ ।

६-जौ परवल को पातमा अथवा पिपलाको काडा र मह मिलाएर खानाले रोग हराउँछ ।

७-अम्लपित्त रोगीलाई पखाला लागे पखालाको उपचार गर्नु ।

८-नीमको पात र अमलाको काढ़ा बनाएर पिउनाले यो रोगबाट मुक्त हुन्छ

९-धान को खरानी आधा तोला बिहान बेलुकी पानीसित खानु यो रोगमा लाभ गर्छ ।

१०–नरिवल डढ़ाएको खरानी आधा तोला सधैं बिहान–बिहान खानाले यो रोग बाट छुटकारा पाउँछ ।

११–पानमा खाने चूना फिटेर राख्दा भोलिपल्ट चूना फेदमा बस्छ माथिबाट संगलो पानी तरेको हुन्छ, त्यो पानी एक तोला खाने गरे यो रोगबाट मुक्त हुन्छ । यहि पानीमा मिश्री मिलाएर ग्राईपवाटर बन्दछ ।

१२–परवल, कुटकी, त्रीफला, यसको काड़ा बनाएर मिश्री फिटेर पिउनाले अमल पित्त रोग जरैबाट जान्छ । परवल (पर्वल) को सब्जी खाइन्छ ।

१३–पिपला, हरडा, चीनी चार चार आना भरी मिलाएर सँधै खानाले पाँच सात दिनमा रोग मुक्त हुन्छ ।

१४–अदुवाको रस र पर्वरको पातको काढा खानाले पाचन शक्ति बढछ तथा उल्टी चिलाउने, जिउमा डाब्रा हुने पोल्ने रोग जाति हुन्छ ।

१५–छाती आदिमा जलन भए अथवा भुँडीमा जलन भए अलैंची चपाएर खानु हाम्रो पहाड़को अलैंची खाए हुन्छ ।

## 'अलैंची'

हाम्रो पहाड़मा अलैंचीको खेती खुबै हुन्छ तर यसको गुण यहाँ कसैलाई नै छैन । यो अलैची चपाएर खानाले जिब्रोको स्वाद हराएको, जिब्रोको खटिरा, गनाउने, आदिमा लाभ गर्छ । छाती भित्र पोल्ने, भुँडी पोल्नेमा, २–४ दाना चपाएर खानाले लाभ गर्छ । यो रामबाण औषधि हो । यसले पितको रोगमा लाभ पुरयाउँछ । अलैची दिनहुँ दुई चार दाना खाए गुर्दा (किटनी) को रोगमा लाभ पुरयाउँछ । कलेजो (लिभर) को रोगमा पनि लाभ गर्छ । यो चपाउनाले दाँत लाई पनि लाभ गर्छ । पाउडर बनाएर क्यापसुलमा भरेको औषधि दोकानमा अरू अरू नामले बिक्री गर्दछन् ।

# 'स्वर भेद'

१-स्वर सुकनु बोलदा आवाज हराउनु । साह्रो कराउनाले उच्च आवाजले धैरे पड्नाले विषालु पदार्थ खानाले, गलामा कुनै धात पुग्नाले आवाज हराउँछ । यो रोगमा पनि बातज, पित्तज, कफज हुन्छ, तर सबै वर्णन नगरी सरल उपचार यस प्रकार छ ।

२-खोकीको धैरे औषधिहरू द्वारा पनि यसको उपचार हुन्छ ।

३-तेलमा नून लगाएर पिउनु ।

४-गुड़ अथवा उखूको रसमा भात पकाएकर खानु र तातो पिउनु रोग जाती हुन्छ ।

५-घिउ पिएर माथिबाट दूध पिउनाले पित्तको कारणले स्वर बसेको जाती हुन्छ ।

६-घिउ र मह दुईवटा केही बेसी कम्ती घिउ बेसी कि मह बेसी मिलाएर खानाले रोग जाती हुन्छ । घिउ र मह बराबर हुनु हुँदैन । बराबर भए विष हुन जान्छ।

७-सुठो, पिपला, गोलमरीच, पिपलामूल (पिपरा) मसिनो पिसेर एक आनादेखि तीन आना भरीसम्म खाने गरे लाभ गर्छ ।

८-सुठो र हरड़ा बराबर पिधेर एक-एक छिनमा अलि-अलि चाटनु ।

९-पानको जरा चपाई बस्नु ।

१०-मुलेठी (जेठीमधु) सुखमा खेलाई बस्नु ।

११-अमलाको चूर्ण गाईको तातो दूधमा फिटेर पिउनु ।

१२-बहड़ाको पात दुई तोला पिधेर घिउमा भुटनु र सिधेनून मिलाएर खाने गर्नु ।

१३-मिश्री र सुँठ मिलाएर पिधनु, छानेर मह मिलाएर गोली बनाउनु र मुखमा राखेर चुस्ने गरे लाभ गर्छ ।

१४-चार आना भरी मूलाको बिउ मसिनो पिधेर गरम पानीसंङ्ग खाने गरे रोग

जाती हुन्छ ।

१५–कबाब चीनी (शितल चीनी) मुखमा राखेर अलि–अलि चूसे रोग जाती हुन्छ ।

१६–उखू पोलेर खानाले रोग जाती गर्छ ।

१७–अदुवाको पानामा छिड़ पारेर त्यसमा अलिकता नून र अलिकता हिंग पिसेर लगाउनु र त्यसको टुक्राले ठेड़ी लगाउनु जब अदुवा पाक्छ झिकेर ताछेर खानु रोग मुक्त हुन्छ ।

१८–अलिकता हिंग तातो पानीमा फिटेर खानु ।

## 'खान नरूच्ने'

१–भोक लाग्छ तर खाना अघि आएपछि अमन हुन्छ, रूच्दैन भने अदुवा कुटेर रस निकाल्नु त्यसको बराबर मह मिलाउनु र यौटा बोतलको गिलास अथवा चिनीया माटोको प्यालामा राखेर एक–एक घण्टामा एक–एक चम्मच खाने गरे खान रूच्छ । जसले रूघा, सास बढ्ने रोग, कफको रोग सबैमा लाभ पुरयाउँछ ।

२–छोटी अलैंची (सुक्मेल) ल्वांग, गोलमरीच बराबर अलिकता बाल्ने कपूर मिलाएर खानु ।

३–इमली (तितीरी) गूड़ पानीमा घोलेर छान्नु र त्यसमा अलैची र गोलमरीचको धुलो मिलाएर खानु ।

४–गाईको मोहीमा जीरा झानेर खानु ।

५–अमिलो दारीम आठ तोला, मिश्री बाह्र तोला, दालचीनी चार तोला छोटी अलैंची चार तोला चूर्ण बनाएर अलि–अलि खाने गरे रोग जाती हुन्छ । यो उत्तम औषधि हो । अमिलोदारीम पहाड़मा हुन्छ ।

## 'छाद्ने रोग'

१–दूधमा दही हालेर फटाउनु त्यसको पानी पिउनु ।

२–घिउमा सिंधेनून मिलाएर खानू बातज छाद्ने रोग जाती हुन्छ ।

३–दूध र पानी बराबर मिसाएर पिउनाले बातज छाद्ने रोग जाती हुन्छ ।

४–बहड़ाको चूर्ण चार आना अथवा आठ आना भरी मह मिलाएर खानाले पित्तज छाद्ने रोग जाती हुन्छ ।

५–चन्दनको काढ़ा बनाएर छान्नु र मह मिश्री मिलाएर पिउनाले रोग पित्तको खराबीले भएको जाती गर्छ ।

६–अमलाको रस चन्दन घोटेको र मह मिलाएर पिउनु ।

७–ईंटा अथवा फलाम तताएर झानेको पानी पिउने गरे रोगमा लाभ गर्छ ।

८–इमली (तितिरी) मुखमा राख्नाले छादनेमा लाभ गर्छ ।

९–अमीलोदारीम, कालो जीरा, मुनक्का आधा–आधा तोला मिलाएर पिंधनु र धूलो अलि अलि चाट्नाले लाभ गर्छ ।

१०–पिपलको रूखको बोक्रा डढाएको खरानी पानीमा मिलाउनु र खरानी तरेपछि घरी–घरी यो पानी पिउने गर्नु ।

११–दारीमको रसमा मिश्री मिलाएर पिउनु यो सबै पित्तको कारण पित्तज रोगमा मूर्छा, बेहोशी, तिर्खा बेसी लाग्नु, रिंगटा लाग्नु गर्मी आदि जाती हुन्छ ।

१२–कफको दोषले भएको छाद्ने रोगमा तान्द्रा, मुखमा पहेलोपन कफ(खकार) आउनु, निद्रा लाग्नु चिल्लो कफ सहित छाद्नु आदि हुन्छ ।

१३–जामुनको रस मुलेठीको चूर्ण मिलाएर चाट्नाले कफज छाद्ने रोगमा लाभ गर्छ ।

१४–हरड़ा, गोल मरीच, पिपला मिलाएर धूलो बनाएर चाट्नाले लाभगर्छ ।

१५–बरको जरो डढ़ाएर खरानी बनाइ यो खरानी अलि अलि चाटनु ।

१६–आधा आना भरी बालछड़ पानीमा पिंधेर खानाले बातविकारले भएको छाद्ने रोग जाती हुन्छ ।

# 'सबै प्रकारको छाद्ने रोग'

१–पीपलको बोक्रा डढाएर खरानी बनाई पानीमा लगाउनु पानी लगाउनु पानी तरेपछि त्यो पानी अलि अलि घरी–घरी खानाले लाभ गर्छ ।

२–बेलको गेडाको काढ़ा बनाएर तारेर मह मिलाएर पिउनु ।

३–काँचो नरीवलको पानी (डाब) ले छादने रोगमा तुरुन्त लाभ गर्छ ।

४–रोटी डढ़ाएर पानीमा भिजाउनु र त्यो पानी पिउनु ।

५–बडा अलैंची जो हाम्रो पहाडमा हुन्छ त्यसको काढ़ा बनाएर पिउनु ।

६–घर साङलेको गू (टट्टी) तीन चारवटा जम्मागरी पानी मिलाएर पिउनु ।

७–बदामको रस पानीमा मिलाएर पिउनु ।

८–पुदिनो (पोदिना) को पात चालीसवटा, पाँच दाना गोलमरीच दुई आना भरी बिरेनून, दुईवटा अलैची पोलेर दुई आना भरी इमली (तितीरी) मिलाएर चाटनाले सबै प्रकारको छाद्ने रोगमा लाभ गर्छ ।

९–कागती (नीबू) को रस आधा तोलामा एक आना भरी पिपला, मह एक आना भरी मिलाएर चाटनाले छाद्ने रोग जाती गर्छ ।

१०–केराको जराको रस (पानी) आधा तोला, मह आधा तोला मिलाएर पिउनु ।

११–पानीमा सेतो चन्दन घोटेको एक तोला अमलाको रस, चार तोला मह एक तोला मिलाएर पिउनाले वाकवाकी लाग्नु र छाद्नु जाती गर्छ ।

१२–चार आना भरी कुटको मह आधा तोला मिलाएर खानाले बाडुली लाग्ने र छाद्ने रोग जाती गर्छ ।

१३–काक माचीको जरा र हिंग मिलाएर पिउनाले छादनु जाती गर्छ ।

१४–तितो नीमको पात पिंधेर छानेर पिउनाले छादनु, पित्त, कोड़, कफमा लाभ गर्छ ।

१५–जंगी हर्रा घोटेर खानाले बालक बूढो सबैको छाद्ने रोग जाती

गर्छ,बालकलाई आधि, दस वर्षकोलाई यौटा र ठूलोलाई दुईवटा अथवा तीनव
सम्म दिनाले तुरुन्तै लाभ गर्छ । कोक्रोको नानीहरूलाई पानीमा घोटेर खुवाउ
ठूलोहरूलाई पाउडर झैं बनाएर खाए हुन्छ ।

## 'प्यास ( तिर्षा ) लाग्ने रोग'

१–सबै प्रकारको छाद्ने रोगमा पित्तनाशक औषधि गर्नु पर्छ ।

२–क्षयजतिर्खामा बाख्राको मासु रस बनाएर पिउनु अथवा मुलेठीको काढा पानी मिलाएको अथवा मह र चिसो पानी फिटेर या शर्बत बनाएर पिउनु, ज सजिलो लाग्छ त्यही उपाय गर्नु ।

३–भोजन नपचेको बाट भएको तिर्खामा छाद्नु उत्तम हो ।

४–डरले अथवा कमजोरीले भएको तिर्खामा दूध पिउनू, दूध तिर्खा रोग लागि उत्तम हो

५–चिल्लो पदार्थ खाएर तिर्खा लाग्ने रोग भएमा गुड़को शर्बत पिउनू ।

६–रक्सी पिएर तिर्खा लागेमा पानीमा अलिकति रक्सी मिसाई पिउनू । पा सिचो प्रयोग गर्नू ।

७–मिहिनत गरेर लागेको तिर्खामा मिश्री, गुड़को शर्बत अथवा मासुको पिउनु ।

८–चिसो पानीमा नुहाउँदा तिर्खा लागेमा रक्सीमा पानी हालेर पिउनू ।

९–कुनै पनि रोगको कारणले तिर्खा लागेमा धनियाँ भिजाएको पानी अथ मिश्री, मह या कांजी (मही) मा मिलाई पिउनू ।

१०–यदि तिर्खा रोग पुरानू भइसकेको छ भने रातो चामलको भात पक चिसो भएपछि त्यसमा मह मिसाई खान दिनू । यसले पुरानु तिर्खा रोग पनि ज गर्छ ।

११–सुन, चाँदी, ढुङ्ग र फलाम कुनै पनि अग्निमा तातो पानीमा झात्रू ( चोप र त्यो पानी पिउनू । यसले तिर्खा रोग जान्छ ।

१२–गुर्च या गिलोयको रस निकालेर आधा–आधा तोला पिउनू ।

१३–मह मुखमा भरी राख्नाले तिर्खा हराउँछ ।

१४–निबूको रस १ तोला, १आना भरी घिउ, १ आना भरी सिंधेनून मिसाई पिउनु साथै टाउको (तालु) मा पनि घसनु अनि तिर्खा लागेर सुक्ने स्थानभापनि लाभ गर्दछ ।

१५–बिहान दुइ तोला धनियाँ उमालेर छानेको पानी चीनी मिसाएर पिउनू तिर्खा र पोल्नेमा जाती गर्दछ ।

१६–पीपलको रूखको बोक्रा डढाई पानीमा लगाउनू । खरानी तरेपछि त्यो पानी माटाको भाँडीमा राखेर सेलाएपछि दुइ–दुइ तोला घरि–घरि पिउनू । रोग मुक्त हुन्छ ।

१७–कसैलाई घाममा तिर्खा लागेर कुनै प्रकारले पनि जाती भएन भने गाईले जंगलमा चर्दा हगेको गोबर सुखा बटुलेर ल्याई डढ़ाउनु । त्यो खरानी काँसको भाँडामा लगाएर भाँडाभरी चिसो पानी लगाउनू र त्यो भाँडा तिर्खाको रोगीको नाभि (नाइटो) माथि राख्नू । यसो गर्नाले पेटको जलन हराउँछ ।

१८–निबूको केस्रा चौलेनीमा पिंधेर पानीमा फेटेर पिउनाले तालु सुक्नेमा लाभ गर्दछ ।

१९–मह तताएर तालुमा लगाउनाले तालु सुक्नेमा लाभ गर्दछ ।

२०–मह र चिनो मिसाएर तालुमा दल्नाले तिर्खा शान्त हुन्छ ।

२१–जामुनको पात र आँपको पातमा चिसो पानी लगाई पिंधेर तालुमा मल्नाले तिर्खा शान्त हुन्छ ।

२२–कागती (निबू) को अचार अथवा निबू रोगीको आगाडी खायो भने रोगीको जिब्रोमा पानी आउँछ ।

२३–बेलुकी दुई तोला निबू काटेर चिनी पानीमा मिलाई राख्नू । बिहान तारेर एक तोला मिश्री मिलाई पिउनाले तिर्खा रोग जाती हुन्छ । हुन सके माटोको हाँडीमा भिजाउनु ।

२४–धनियाँ पिंधेर पानीमा मिलाउनु र पानी घोलेर कपड़छान गरी अलि अलि मह अथवा मिश्री मिलाई पिउनु रोग मुक्त हुन्छ ।

२५–बालकलाई तिर्खा लाग्ने रोग भए ढुंग्रेझार (ब्राह्मी) पिंधेर रस निकाल्नु र त्यसमा अलिकति जीरा र मिश्री पिंधेर मिलाउनू । यसबाट आध–आधा चम्मच यो पानी दिनाले रोग हराउँछ ।

२६–धनियाँको काढ़ा बासी बनाएर पिउनाले रोग जान्छ ।

२७–तालु सुक्छ भने कुनै अमिलो चीज दूध अथवा उखूको रस अथवा गुड़ मिलाई कुल्ला गर्नु ।

२८–आरूबखडा पोलेर मुखमा राख्नाले रोग हराउँछ ।

२९–डाइबेटिज (मधुमेह) को रोगीले तिर्खा जागेर जति पानी पिउँछ उती रोग बढ़छ ।

## 'औषधिको विधि'

१–रस अथवा स्वरस भनेको औषधि कुटेर रस निकालेकोलाई भनिन्छ ।

२–कल्क भनेको सूखा औषधि पानीमा लगाएर पिंधेको हो ।

३–फुटपाक भनेको कुनै औषधिलाई पात अथवा कागदमा पोको पारेर भुङ्ग्रोमा आलू झैं पोलेर निकाली रस निचोरेर निकालेको अथवा तेसै खाने योग्य बनाउनु ।

४–क्वाथ भनेको खस्रो कुटेर भाँडामा लगाएर पकाउनु र एक चौथाई पानी रहेपछि निकाल्नु (औषधिमा पानी लगाएको हुनुपर्छ) यसैलाई काढ़ा पानी भनिन्छ।

५–हिम भनेको बेलुकी चिसो पानीमा भिजाई राखेर बिहान तारेर खानु छोक्रा फ्याँक्नुलाई भन्दछन् ।

६–फाट भनेको कुनै औषधिलाई खस्रो कुटेर तातो पानीमा भिजाउनु र एक डेढ़ घण्टापछि तारेर निकालेको पानी हो ।

७–चूर्ण भनेको औषधिलाई कुटेर धुलो बनाउनु (पिठो पार्नु) ।

८–तोला भनेको पुरानो चाँदीको रूपियाँलाई भनिन्छ जसको ओजन १२ ग्राम हुन्छ । लाल भनेको सुन तौलिने लाल गेड़ी हो आठ लाल बराबर एक ग्राम हुन्छ । एक ग्रामलाई आठ भाग पारेर एक भाग हो ।

९–कुनै पनि औषधि अन्दाजले लिन सकिन्छ तौंलनु पर्दैन ।

१०–विषालु, मातने औषधिको अन्दाज होशियारीले लिनु पर्छ ।

११–सधैं खाई बस्ने खाद्य पदार्थ मात्रा केहि बेसी गरदा हानि हुँदैन ।

१२–उपचार गर्दा मह प्रयोगमा जति पुरानो मह हुन्छ अति उत्तम हो नयाँ मह प्रयोग गर्नु लाभदायक हुँदैन । कम्तीमा छ महिना वर्ष दिन भन्दा पुरानो मह असल हुन्छ । मह प्रयोग गर्दा राम्रो परीक्षा गर्ने उपाय घरेलु औषधि पहिलो भागमा हेर्नु होला ।

१३–त्रिफला तीन बटा औषधि मिलेको, त्रीकुटा तीनबटा औषधि पंचकोला पाँचबटा औषधि मिलेकोलाई भनिन्छ ।

## 'मूर्छा रोग'

साधारण कोही मानिस मरे रूँदा अथवा कुनै अचानक फिक्री, दुःख,सुखको अनुभवको कारण मानिस ज्ञानहीन भएर काठझैहुनुलाई मूर्छा भनिन्छ मूर्छा कारण कमजोरी हुनु, पित्त बढ्नु, विरुद्ध भोजन गर्नु, मलमूत्र रोकनु कुनै प्रकारको चोट लाग्नु, तत्व गुणको कमी हुनु इत्यादि । विशेष कमजोरी मानिसलाई यो रोगी बेसी मात्रामा हुन्छ । यसमा पनि आयुर्वेदको भनाई अनुसार वातज, कफज, त्रिदोष र रक्तज हुन्छ ।

१–तमोगुणी मनुष्य खूनको गन्धले मूर्छा हुन्छ । खून देख्दा मूर्छा हुन्छ । मद्यको मूर्छा रक्सी इत्यादि पिउनाले हुन्छ । कमजोरीको मूर्छालाई तत्काल होशमा ल्याउने उपाय गर्नुपर्छ । नत्र मरण हुन सक्छ । सन्यास रोगमा आँखामा तेज पोल्ने सुर्मा लगाई दिनु उचित हुन्छ । अथवा कड़ा छींक आउने नस सुङाउनु । मूर्छा र सन्यासको फरक–सन्यास रोगमा उपचार बिना आराम हुन सक्तैन, मूर्छा एकछिनपछि आफै पनि होशमा आउँछ ।

# 'उपचार'

१-मूर्छा रोगीलाई पहिले साधारण उपचार गर्नुपर्छ, जस्तै अनुहारमा चिसो पानीले छम्कनु, नस सुँगाउनु, दस वर्षको पुरानो घिउले मालिश गर्नु । हमकीनु अथवा एमोनिया सुँगाउनु । सुर्मा लगाईदिनु आदि, भ्रम रोगीलाई दस वर्षको पुरानो घिउको मालिश उत्तम हो । मृगी (छारे रोग) मा जोड्ले छींक आउने नस र आँखा पोल्ने सुर्मा लगाउनु । त्यसपछि मूर्छा नाशक औषधि दिनु ।

२-भुँडीमा जुका परेर अथवा कुनै प्रकार किटाणु भएर मूर्छा भएमा जुका अथवा किटाणु नाशक औषधि गर्नु ।

३-खूनको मूर्छामा शीतल उपचार गर्नु ।

४-रक्सीको मूर्छामा फेरि रक्सी नै कम मात्रामा दिनु । अरू प्रकारको मूर्छामा रक्सी दिनु हुँदैन ।

५-विषको मूर्छामा विष नाशक औषधि दिनु । गोल मरीच पिंधेर नस सुगाउनु उत्तम हो । एक-एक छिनमा छींक आउने नस सुगाउनु मूर्छा रोगमा उत्तम हो । विष खाएकोमा छदाउनाले पनि उत्तम काम गर्छ, केहि नपाए खुकुराको सुली पानीमा घोलेर खुवाउनाले तुरुन्तै छादेर विष निकलन्छ ।

६-मूर्छा परेकोमा नाक मुख केहि बेर बन्द गर्नाले पनि होशमा आउँछ तर धेरै बेर बन्द गर्नु हुँदैन ।

७-लोवान (लोहवान) को धुवाँ सुँगाउनाले पनि मूर्छा हराउँछ ।

८-काक्रो काटेर सुङ्गाउनाले पनि लाभ गर्छ ।

९-कौंचको सुखा फल शरीरमा रगड्नाले पनि लाभ गर्छ ।

१०-पिपला मसिनो पिंधेर मह मिलाएर चाटनाले लाभगर्छ ।

११-पंचमूलको काडा मिश्री मह मिलाएर चाटनाले लाभगर्छ । यो उत्तम औषधि हो ।

१२-कमलको फूलको जरा कमलको डांठ पिपला हड़रा बराबर गरी मिलाएर

महसङ फिटेर चाटनाले मूर्छा रोग जाति हुन्छ ।

१३–स्त्रीको दूध पिउन दिनाले मूर्छा रोगमा लाभ गर्छ । बाणभट्ट ऋषिले स्त्रीकै दूधको धुँवा सुङ्गाउनु पनि भनेको छ ।

१४–दाख, चिनी, दारिम, धानको लावा (खिल) दहीको पानीमा निलो या सेतो कमल सबैको महि पिउनाले मूर्छा नष्ट हुन्छ ।

१५–अमलाको रसमा पकाएको घिउ पिउनाले मूर्छा नष्ट हुन्छ ।

१६–मुलेठी (जेठीमधु) को काढ़ामा पकाएको घिउ पनि मूर्छाको रोगीलाई उत्तम हो ।

१७–अमलाको रसमा पकाएको धानको खिल (धान भुटेको फूल)मिश्री मिलाएर पिउनाले मूर्छा रोगमा लाभ गर्छ ।

१८–अमलाको गेडाको मिश्री गेडा फ्याँकेर बाहिरको छिल्कालाई मसिनो पिधनु र उखूको रसमा पकाउनु ४८ घण्टासम्म पकाएर जति उखुको रस सुकाउनु छ ''स थप्दै सुकाउनु र छानेर राख्नु चार–चार आना भरीको खुराक दिनमा तिनपल्ट यो औषधि दिनाले मूर्छा, तिर्खा, प्रमेह, जलन, पित्त विकार सबै जाती हुन्छ । यो परीक्षा गरिएको औषधि हो ।

१९–ब्राह्मी (ढुङ्ग्रेझार) यसलाई गोल पत्ता, घोडताप्रे, पनि भन्दछन् यो ारको रस घिउमा मिलाएर खाने गरे पित्तको मृगी रोगमा लाभगर्छ ।

२०–ब्राह्मीको पातको रस एक तोला कुलंजन चार आना भरी मह चार आना भरी मिलाएर बिहान–बिहान चाट्ने गरे पगला, बौलाएको चित्त भ्रम, मूर्छा, मृगी ागहरू सबै जाती हुन्छ । ब्राह्मी उत्तम औषधि हो ।

२१–कमलको पात, मुलेठी, अनि मिश्रीको काडा बनाएर चिसो भएपछि पिउनाले पित्तको जरो, मूर्छा जाती गर्छ ।

२२–हिस्ट्रीया–यो रोग प्राय: स्त्रीजातीहरूलाई हुन्छ । यो रोगमा बेहोश भएको ाकोमा चिसो पानी लगाउनु । सुँठो गोल मरीच र पिपलाको नस बनाएर कागतको ाी बनाएर नाक भित्र फुकी दिनु छींक आएर होशमा आउँछ । अथवा तुलसीको

पात र गोलमरीचको नस बनाएर नाकमा नस लगाई दिनु । दाँत, बांधेको भा मुजुरको प्याँख डढाएर सुँघाई दिनु । अथवा खरानी दाँतमा मलीदिनु । यो पनि नपा पियाज कुटेर नाक भित्र रस चुवाई दिनु ।

२३–हिस्ट्रीया रोगमा कति स्त्रीजातिहरू पगला (बौलाहा) हुन्छन् । यस रोगमा हिंग सर्वोत्तम औषधि हो, बिहान बेलुकी खाना खाएपछि यौटा चनाको दाना जती हिंग दिने गर्नु ।

२४–घोडाको मुखबाट आएको फिंजमा मरीच घोटेर सुर्माझै लगाउने ग बेहोश भएको होशमा आउँछ ।

२५–स्त्रीको दूध अथवा बाख्राको दूध नाकमा चुवाउनाले होश आउँछ ।

२६–सुन उज्याल्ने नौसादर र चूना मिसाई झट्टै सुँगाउनाले हिस्ट्रीयाको मूर्छा तुरुन्तै होशमा आउँछ ।सुकेको चूनाले हुँदैन, ताजा हुनुपर्छ । यो औषधि राम्रो मु बन्द हुने हावा नजाने बिर्को भएको बोतलमा बनाई राखे हुन्छ । जति बेला चाहि काम लिन सकिन्छ तर ग्यास गयो भने काम लाग्दैन । यसले पग्ला भएको भूतलागेकोमा पनि लाभ गर्दछ । डाक्टरहरू यसैलाई 'स्यायल साल्ट' भन्दछन्

२७–हिस्ट्रीया रोगीलाई जटामासी १ तोला बेलुकी पानीमा भिजाई राख्नु बिहान त्यो पानी तारेर मिश्री मिसाई दिनेगर्नू ।

२८–हिस्ट्रीया रोगीलाई सकभर विवाह गरिदिनू ।

२९–हिस्ट्रिया रोगमा अपामार्गको जरा १ तोला, गोलमरिच चार दाना पि सात दिनसम्म दिनहुँ यहि मात्रामा खुवाउनू अथवा शुद्ध हिंग र बाल्ने कपूर मि पिधेर एक–एक आना भरी दिनमा तीन छाक अथात् तीनपल्ट दिने गर्नू ।

३०–मासिक धर्म बन्द भए अरू औषधि खोज्न गाह्रो परे डाक्टरको दो बाट अर्बोलिन (Arbolin) ट्याबलेट किनेर ल्याई दिनमा एक–एक ट्याबलेट तीन दिने गर्नू ।

३१–बन्ध्यालाई हात्तीको दाँत पानीमा घोटेर ऋतुकालमा तीन दिनसम्म खाए गर्भ रहन्छ ।

# पगला ( बौलाहा भएको )

मानिस बौलाउनू मानसिक रोग हो । यो रोगमा छाद्ने र छेर्ने औषधि साथै नस सुँधाई छींक काढ़न लगाउनू उत्तम हो ।

त्यसपछि औषधि दिनू चाँडो लाभ हुन्छ भन्ने चन्द्रोदयको भनाइ छ । यो रोग बातज, कफज, पित्तज, सन्निपातज हुन्छ, साथै शोकज (सुर्ताको) इश्क (कसैको प्रेममा) मालीखोलिया (कुनै चीज हराउँदा), पित्तज (विषालु चीज खानाले) यसमा हिस्ट्रिया पनि यौटा हो ।

सब प्रकारको पागल भएको छोटकरी लक्षण--

१-वातज बौलाहा-यो रोगीको शरीर रूखो अनि रातो वर्ण हुन्छ ।

२-पित्तज बौलाहा-यो रोगीको रूप-रंग र अनुहार पहेंलो वर्ण, चीसो चीज मनपराउने हुन्छ ।

३-कफज बौलाहा-आँखा, टट्टी, पिशाब, छाला सेतो वर्णको हुन्छ ।

४-सन्निवातज-माथि लेखिएका तीनै प्रकारका लक्षण हुन्छन् ।

५-शोकज-यो रोगीले अनेक प्रकारका गुप्त कुराहरू गर्दछ, अनेक कुराहरू पनि गर्दछ ।

६-विषज बौलाहा-यसको अनुहार श्यामवर्ण आँखा राता हुन्छन् ।

७-हिस्ट्रियामा-पेटबाट कुनै चीजको गोला उठेर मुटुपट्टि आएको भान बिरामीलाई लाग्छ ।

८-भूतज देवता, ग्रह आदिले बौलाहा भए त्यसको पराक्रम बोलचाल, आंट, कोशिश मानिसको झैं हुदैन, त्यसको विचार-शक्ति र सिल्प आदिको ज्ञान, अभिमान देवताको झैं हुन्छ । भूतज बौलाहाको यही चिह्न हो । साथै बौलाउने तिथि निर्धारित हुन्छ ।

९-दैत्यविष्ट-जो दैत्य ग्रहले पगला हुन्छ, त्यो पसिनाले तर रहन्छ, ब्राह्मण गुरू, देवता आदिको निन्दा गर्छ त्यसका आँखा बाङ्गा हुन्छन् । कसैसित पनि

डराउँदैन, कुमार्ग पट्टि मन जान्छ । जति खाए पनि अघाउन्न अथवा सन्तोष हुँदैन।

१०–गन्धर्व बौलाहा–खोलाको किनार, बन, जंगल, मनपराउँछ । अन्तः–करण खुशी रहन्छ । गाउनु, सुगन्धित वस्तु मनपराउनू, नाच्दै मुस्कुराउनु यसको परिचय हो ।

११–देवग्रह ग्रसित पगला–सन्तोषी र पवित्र रहन्छ । त्यसको शरीरबाट सुगन्ध आउँछ, ब्राह्मण र गुरूहरूलाई भक्ति गर्दछ, अरूलाई वरदान दिन्छ, आफै सन्तुष्ट रहन्छ ।

यदा विष्टाको लक्षण–यो रोगी गम्भीर हुन्छ, आँखा रातो हुन्छ सुन्दर मसिनो राम्रो लुगा मनपराउँछ । उत्तम गाना सुगन्धित पदार्थ र फलसङ प्रेम गर्छ । छिटो हिड्छ कम्ती बोल्छ ।

पित्राविष्ट–पितृहरूले पीडित बौलाहा कुश आदिले आफ्ना पितृहरूलाई पिण्ड दिन्छ । दाहिने काँधमा लुगा राखेर पितृहरूलाई पिण्ड दिन्छ । अथवा पानी दिन्छ मास, तिल, गुड़ खीर खाने इच्छा गर्छ ।

राक्षसग्रहको बौलाहाले–मासु खून, रक्सी, मनपराउँछ बेशर्मी, निर्दयी, आँटिलो र रिसाहा हुन्छ । राती घुम्नु र मैला मनपराउँछ ।

पिशाच पीडित बौलाहा–नांगो हिंडछ, दुब्लो, कमजोर नराम्रो कुरो गर्ने, उसको शरीरबाट दुर्गन्ध निकलनु, खानमा लोभी, सुन–सान जंगल अथवा जंगलमा घुम्न मनपराउनु नचाहिन्दो काम गरेर थकित भएपछि रूनु आदि लक्षण हुन्छ ।

कुन प्रकारको बौलाहा कति बेला बौलाउँछ ।

१–देवग्रह पीडित–पूर्णिमाको दिन बेसी बौलाउँछ ।

२–दैत्य–बिहान बेलुकी सन्ध्याकालमा ।

३–गन्धर्व–अष्टमीको दिनमा ।

४–यक्ष–परेवाको दिनमा ।

५–पितृग्रहले–कृष्ण पक्षमा ।

६–सर्प बौलाहा–पञ्चमीको दिन ।

७–राक्षस–राती ।

८–पिशाच–चतुर्दशीको दिनमा ।

पितृग्रहले–कृष्णपक्ष औंसीको दिनमा यस प्रकार धेरै पगलाहरूको लक्षण ।चकित्सा चन्द्रोदय सात भागमा पाइन्छ । इच्छुक व्यक्तिले 'बाबु हरीदास एण्ड ...म्पनी प्रा० लि० मथुरा (पटना) बाट पढ्ने गर्नु होला ।

९–इश्क रोग अथवा कसैको प्रेममा फसेर अथवा मन परेको वस्तु धन आदि ...राउँदा पगला हुनेलाई त्यो विषयबाट भुलाउने उपाय गर्नु उत्तम हो । अविवाहित ...्रीलाई तथा अरू गन्दकी किताब र घृणित चलचित्रबाट बचाउनु उत्तम हो ।

बौलाएको मानिसको उपचार गर्दा यदि निधार चल्नी आदि ठाउँमा नसा ...लिएको छैन भने अफीमको एक–एक खुराक रोगले आक्रमण गर्ने बेलामा दिने ...रे उत्तम–उत्तम काम गर्छ । अफीमको आदत पगला भएकोलाई लाग्दैन सज्जन ...एपछि खुवाउनु हुँदैन । यो उपचार चल्नी आदि ठाउँमा नसा नफूलिएकोलाई मात्र ...र्नु नसा फुलिएको छ भने त्यस रोगीलाई अफीम दिनु हुँदैन । पगला भएकोलाई ...हाँसम्म निद्रा लाग्ने औषधि दिनुपर्छ । कसैको प्रेममाफसेर त्यसलाई भुलाउने ...पाय गर्नु । यौवनको फेरमा हिस्ट्रिया भएको स्त्रीजाति हो भने विवाह गरी दिनु ...त्तम हो ।

## 'पगलाको उपचार'

१–ब्राह्मीको पातको रस चार तोला, कुटको चूर्ण डेढ आनाभरी आधा तोला ...ह मिलाएर चाटने गरे पगला भएको जाती हुन्छ ।

नोट–कुट हिन्दी शब्द हो ।

२–पिठेको बिउको चूर्ण आधा तोला, कुटको चूर्ण डेढ़ आना भरी, आधा तोला मह खाने गरे रोग मुक्त हुन्छ ।

नोट–पिठे हिन्दी शब्द हो ।

३–शंखहुलीको रस चार तोला, कुटको चूर्ण डेंढ आनाभरी, मह आधा तोला ...क ठाउँ मिलाई खाने गरे रोग मुक्त हुन्छ, (शंखहुली हिन्दी शब्द हो) ।

४-चम्पाको फूल दिनहुँ दुई तोला एक तोला, मह मिलाएर खाए पगल भएको रोगी जाती हुन्छ ।

५-ब्रह्माल या पहेंलो फूलको हाँगाको रस पिउने गरे पगला जाती हुन्छ ।

६-पगलालाई उनको ताकत हेरेर दस वर्षको पुरानो घिउ पिउन लगाउनु केही दिन यसरी घिउ पिउनाले रोग जान्छ ।

७-लालगेड़ी रातो खालको काँचो ल्याएर दुई लाल एक पावा दूधमा पका दिने गर्नु । यसरी केहि दिन खानाले लाभ गर्छ ।

८-पगलालाई डर देखाउनु, बिना दाँतको सांप ल्याएर ठुङ्गाउनु माथि मृगी लेखेको नौसादर चूना फिटेर मुख बन्द गरी जवरजस्ती नाकमा ठोसेर सुङ्गाउ रामबाण हो ।

९-ब्राह्मीको रस र मह, पिठेको रस मह, बोझोको रस र मह, शंखहुलीको र र मह, कुनै पनि सेवन गराउनाले रोग मुक्त हुन्छ । तर एकै पल्टले रोग जाँदैन के दिन प्रयोग गर्नु ।

१०-माण्डव पर्णी (ब्राह्मी) को रसमा धतुराको पातको रस मिलाएर पिउना बौलाहा जाती हुन्छ ।

११-घिउ र दूधसंङ्ग बाझोको चूर्ण मिलाएर खाने गरे पगला जती हुन्छ यसको जरा प्रयोग गर्नु ।

१२-बौलाएकोलाई लाटकोसेरो, बिरालो, शियाल, भेडा, बाख्राको पिश (मूत्र) अथवा टट्टी इनीहरूको नङ्ग मासुको धूप सुँगाउनु उत्तम हो ।

१३-बौलाहाको अनुहार फिक्का छ, नाड़ी मन्द (ढिलो) छ, निद्रा लाग्दैन भ माथि लेखिएको झैं अफीमको उपचार सर्वोत्तम हो ।

## 'दैवी चिकित्सा' (मन्त्र)

१-ॐ नमो भगवते नारसिंहाय, अतुलविर, पराक्रमाय घोर रोप महिषा रूपाय त्रैलोक्य दंड धराय रौप्र क्षेत्र पालाय ह्रौं ह्रौं क्रीं क्रीं क्रीं मिती ताडय ता

मोहय मोहय द्रात्रै, दुर्गे भय आभं आभं साधय साधय अ सक्रिय प्रितीं ललाटे वंधय, ह्रीं हृदये स्तंभय स्तंभय अभूति अदूतिस्थात । राक्षसं प्रद्यादय, अक्षाहय आकाश प्रच्छादये सिंहतिपुत्रं प्रद्यादय एते डाकिनी ग्रह प्रच्छादय सादय साकिनी भूत प्रेत पिशाचादि एकातीक द्वाहिक त्राहिक चतुर्थिक पञ्चम ककतित पेतिक देस्मिक सन्निपात केसरी, डाकिनी ग्रहादि मुञ्च मुञ्च स्वाहा गुरूको शक्ति मेरी भक्ति फुरो मन्त्र ईश्वरी वाचा ।।१।।

नोट–यो मंत्र भन्दै मुँजुरको प्वाखले अथवा फलामको चिम्टा अथवा फलामको कुनै चीजले एक्काईस पल्ट झार्नु । भूत प्रेत बाधाले पगला भएको हो भने जाती हुन्छ ।

यो मंत्र जीवपुरको महाराज स्व० राजेन्द्र श्री सवाई सिंह जी द्वारा लिखित पुस्तक द्वारा संकलन गरियो पाठकले हेर्नु होला ।

१५–धनवन्तरीको भनाई छ सेतो धतुरा (धतुरो) को उत्तर दिशापट्टि गएको जराको बोक्रा अन्दाज दुई आना चूर्ण आधा सेर पानीमा फिटेर पाँच तोला पुरानो चामल पकाउनु र एक सेर गाईको दूध र आधा पावा गुड़ (गुड़को बदला चीनी लिन सकिन्छ ) अढ़ाई तोला गाइको घिउ मिलाएर खीर बनाई सेवन गर्नाले सबै प्रकारका पागलहरूलाई शान्ति हुन्छ ।

## 'मृगी' ( छारे रोग )

यो रोगमा मानिस अचेत भएर लड्छ, यो रोग, पित्त, कफ, आदिले हुन्छ साथै स्त्रीजातिलाई यौवन अवस्थामा र अरू कारणले पनि हुन सक्छ, कमजोरी मानिसलाई पनि हुन सक्छ ।

१–वातज मृगीमा शरीर काम्ने, दाँत कुड़िने, मुखबाट फिंज आउने आदि गाँस बड़ने, आँखा अति रातो चिनगारी देख्ने आदि ।

२–पित्तज मृगीमा आँखा पहेंलो हुने, तिर्खा लाग्ने, सबै तिर आगो झैं देख्ने या चीजहरू पहेंलो देख्ने आदि ।

३–कफज मृगीमा मुखमा फिंज सेतो हुने, आँखाको रंग सेतो हुने, शरीर भारी

हुने सबै चिज सेतो देख्ने आदि ।

४-सन्नीवातजमा उपरोक्त लक्षणहरू मिलेको हुन्छ ।

५-हिस्ट्रिया-लोग्ने स्वास्नीमा प्रेम नहुनु, लोग्नेको हेला हुनु, रक्तस्राव न हुनु आदि कारणले यो रोग स्त्री जातिलाई हुन्छ । यो रोगमा बिना कारण हाँस्नु, व्यर्थ आफूलाई अपराधी ठानेर अरूसंग माफी मांगी हिड़नु, बिना कारण रूनु चिच्यानु हुन्छ । मूर्खहरूले भूत-प्रेत लागेको भनी सम्झन्छन् ।भुँड़ीमा कुनै प्रकारको गोला झैं उठेर मुटुपट्टि आएको भान भए यो लक्षण हुन्छ ।

६-दिमागको मृगी, खूनको मृगी, घाँटीदेखि उधोको मृगी, हात खुट्टाको मृगी, गर्भाशयको मृगी आदि धेरै प्रकारको (छारे रोग) हुन्छ ।

## 'सरल उपचार'

१-गोल मरीच, सुँठ, पिपला, बराबर लिएर सेहुड़को दूधमा २० दिनसम्म भिजाई राख्नु बीस दिनपछि पानी लगाएर पिंधनु र यसको नस सुग्ने गरे छारे रोग जान्छ ।

२-निर्गुण्डीको रस नस लिनाले मृगी रोग जान्छ ।

३-आंकको जराको रस बाख्राको दूधसंग पिंधेर दुई, चार थोपा नाकमा चुहाउने गर्दा मृगी जान्छ ।

४-मृगी आएको बेलाबाख्राको सिङ डढ़ाएको धुवाँ सुँगाउनु ।

५-सेतो पियाजको रस नाकमा चुवाई दिनाले तुरन्तै होस् आउँछ ।

६-चमेराको सुली जिउमा घसने गरे मृगी रोग जान्छ ।

७-एक तोला लहसुन कालो तिलको दुई तोला २१ दिनसम्म दिनहुँ खाने गरे मृगी छारे रोग हराउँछ । एक तोला लहसुन र कालो तिलको तेल तीन मिलाएर पनि हुन्छ ।

८-ब्राह्मीको पातको रस एक तोला माउरीको मह मिलाएर दिनहुँ खाने गरे छारे रोगबाट मुक्त हुन्छ ।

गधाको चारवटा दाँत डढ़ाएको धुवाँ सुँघाउनाले पनि मृगीमा लाभ गर्छ ।

९–मुलेठी पिंधेको धुलो (चूर्ण) पेठेको रस मिलाएर दिनहुँ खाने गरे मृगी रोग जान्छ ।

१०–एक तोला बोझो (बच) को चूर्ण मिलाएर दिनहुँ खाने गरे रोग मुक्त हुन्छ ।यसमा घिउ पनि मिलाए उत्तम हो।

११–झुण्डीएर मरेको मान्छेको डोरी डढाएर खरानी बनाई चिसो पानीमा खानाले पनि लाभ गर्छ भनिएको छ ।

१२–सुँगुरको पिसाबको माटो मृगीवालाको साथमा राख्नु ।

१३–मुसाको थुतुनाको जन्तर बनाएर बालकको घिच्रोमा लगाइदिनाले बालकलाई मृगी आउँदैन ।

१४–सुंगुरको खुरको औंठी मंगलवारको दिन बनाएर मृगी रोगीको दाहिने हातको कान्छि औंलामा लगाउनु ।

१५–भेड़ाको वरकुला र हड्डी मृगीको रोगीले साथ राख्ने गरे मृगी आउँदैन ।

१६–कछुवाको रगत (खून) एक तोला जौको आटा (पिठो) एक तोलामा एक तोला मिलाएर कालो दालको दाना बराबरको गोली बनाएर छायामा सुकाउनु र दिनहुँ बिहान बेलुकी एक एक गोली खाने गरे केही दिनमा मृगी रोग हराउँछ ।

१७–भैंसीको डढाएको खरानी मृगीको रोगीले दिनहुँ बिहान बिहान खाने गरे लाभ गर्छ ।

१८–घिउमा हिंग मिलाएर केहि दिनसम्म दिनहुँ खाने गरे लाभ गर्छ । स्त्री जातिको हिस्ट्रियामा पनि लाभ हुन्छ ।

१९–स्त्रीजातिको मासिक धर्म बन्द भएर रोग भएकोमा मासिक धर्म खुल्ले उपचार गर्नु ।

२०–उपरोक्त औषधिहरू पाठकले परीक्षा गर्नु धेरै पुरानो मृगी रोगीको उपचार गर्न कठिन छ । एक दुई वर्षको रोगीलाई मैले अंग्रेजी डाक्टरको औषधि डिलानटिन

(Dilanten) को प्रयोग धेरैमा सफल भएको छ । त्यो औषधि ४–६ महिनाको रोगीले ६ महिना वर्ष डेढ़ वर्षको रोगीले डेढ़ दुई वर्ष प्रयोग गर्नुपर्छ । अरू पुरानो रोग भए अरू बेसी दिन लगातार प्रयोग गर्नु । पहिला यो औषधि खुवाउदा बिहान बेलुकी एकाएक क्याप्सुल दिनको एक चौथाई समय बितेपछि दिनमा एक क्याप्सुल आधा समय रहेपछि दुई दुई दिनमा एक क्याप्सुल त्यसपछि दुई दिन छोडेर एक क्याप्सुल खाने गरेर समय तोकेको पुरा भएपछि छोड़ी दिनु बिचमा जाती भयो भनेर औषधि खान छोड़नु हुँदैन छोड़ेमा फेरि रोग बल्झन्छ । बरू तोकीएको दिन भन्दा बेसी दिन खानाले अरू लाभ गर्छ । छ महिना औषधि खाने विचार हुनेले डेढ़ डेढ़ महिनाको वर्ष दिन खाने विचार भए तिन तिन महिनाको दुई वर्ष खाने विचार भए छ छ महिनामा डोज (खुराक) घटाउने गर्नु पर्छ । यो औषधिले कैयौं रोग जाती पारेको छु। केहि दिन खादैमा जाती भयो भनेर औषधि खान छाड़ने भुल नगर्नु । यो औषधि डाक्टरको दवाई बेच्ने पसलमा पाइन्छ । अरू आयुर्वेदिक औषधि जड़ी बूटी चिन्न नसके 'गर्ग' औषधि भण्डार अलीगढ़ यू० पी० बाट मगाए हुन्छ ।

२१–लहसुन तोरीको तेल संग, सतावरी दूध सङ, ब्राह्मीको रस महसंग दिनहुँ खाने गरे सबै प्रकारको मृगी रोग हराउछ, यो जुन औषधि आफूलाई सजिलो लाग्छ तेही अपनाउनु होला ।

२२–गाईको मूतमा तोरी पिंधेर मृगीवालाको शरीरमा घस्ने गरे आधा तोला साथै पिधेर खाने गरे रोग हराउछ ।

२३–भैंसीको खुर डढ़ाएर खरानी बनाई चार चार आना भरी खरानी बिहान बिहान खाने गरे मृगी रोग बाट छुटकारा पाइन्छ । कड़ा आँखा खुवै पोल्ने सुर्मा पनि साथै आँखामा लगाउनु गर्नु ।

भनिएको छः–

**तैंलं च लशुनं शुद्धं बयसा च सतावरी ।**
**ब्राह्मीरसश्च मधुनां सर्वापस्मार भेषजम् ।।**

नोट–मृगीलाई आपस्मार भनिन्छ ।

२४–गाईको मूतमा तोरी पिधेर मृगीवालाको शरीरमा लेपगर्नु (घसनु) अनि गाईकै दूधमा आधा तोला तोरी पिंधेर खाए पनि लाभ गर्छ ।

भनिएको छः–

**गोमूत्र युक्त सिद्धार्थे प्रलेपयोद्वर्तने हिते ।**
**धूमृतीक्ष्णानि नास्यानि दाहः सूच्या कपोलयो ।।**

२५–हिस्ट्रियामा अपमार्गको जरा एक तोला गोलमरीच चार दाना पिधेर सात दिनसम्म यसरी नै सधैं खानु रोग मुक्त हुन्छ ।

२६–शुद्ध हिंग र बाल्ने कपूर बराबर मिलाएर पिंधनु एक एक आना भर दिनमा तीन पल्ट खाने गरे रोगी जाती हुन्छ ।

२७–पुरानो लुगा एक हातले हात्तीको खुट्टा देखि छातीसम्म आएको पसीना पुछेर त्यो लुगा छायामा सुकाएर राख्नु मृगी आएको रोगीलाई एक इञ्च लुगा च्यातेर पानीमा भिजाएर नाक भित्रसम्म पुग्ने गरेर पानी नाकमा चुहाई दिने गरे रोग जाती हुन्छ । चरण तीर्थ महाराजको नुस्खा हो ।

## 'बात ब्याधि वर्णन'

बात रोग अस्सी प्रकारको भनिएको छ । छोटकरीमा केहि उपचार लेखी रहेको छु । पाठकले परीक्षा गर्नु होला ।

१–वायुको दोष 'सप्तगत' ले शरीरको छाला खस्रो हुने, फाटने, पतला, कालो सियोले घोचेझैं दुख्ने अथवा शरीरको रंग बिग्रने कमजोरी खानमा रूचि नहुने, शरीरमा फोकाहरू हुने इत्यादि ।

२–मासगत वायु :–शरीरमा भारी हुनु–लठ्ठिले अथवा मुड्कीले हिर्लाए झैं दुख्नु थकाई लाग्नु ।

३–मेदोगत वायु मासुमा वायु प्रकोप भए केही दुख्ने गाँठोहरू हुन्छ ।

४–हड्डीमा वायु भए हड्डीको जोड्नी भांचिएला झैं गरी दुख्छ जोड्नी दुख्छ बल क्षीण हुन्छ निद्रा लाग्दैन ।

५-मज्जा गत वायुमा सवै हड्डीमा वायु भए झैं लक्षण हुन्छ तर एकोहोरो दुःखी रहन्छ। मज्जा भनेको हड्डी भित्रको माँसी हो।

६-शुक्र गत वायु-विकार वीर्यमा प्रवेश गरे वीर्य स्खलित हतपत हुँदैन कच्चा गर्भ नै गर्भपात हुन्छ, गर्भ मुड़ हुन्छ अथवा वीर्य चाँठो निकलन्छ, यस प्रकारको वायुले वीर्य र गर्भ दुर्बलमा नोक्सान पुरयाउँछ। चरकको भनाईमा रसगत वायुमा स्नेहस्वंग स्वेदन गर्नु, रूधिरगत वायुमा शीतल लेप लगाउनु, जुलाप दिनु, नसाबाट खून निकाल्नु, मासु मेदगत वायुमा जुलाप दिनु निरूह वस्ति गर्नु अथवा औषधि को काड़ा बनाएर मलद्वारबाट पिचकारी लगाउनु। हड्डी र मज्जागत वायुमा घिउ तेल खानु र शरीरमा तेल को मालिश गर्नु। केतक्य तेल अथवा वात नाशक तेल मालिश गर्नु।

७- कोष्टगत वायुमा काँचो भोजन, आग्निले पाकेको भोजन, मूत्रस्थान खूनको स्थान, पिठीउँ, फोक्सो सबैलाई मिलाएर कोष्ट भनिन्छ। यस कारण भुँड़ीको भागमा रहने (आमाशय) वायुको लक्षण:-

८- आमाशय (भुँडी) मा वायु विकार भए, मुटु, करङ्ग, नाभि, दुख्नु तिर्खा लाग्नु, डकार बेसी आउनु, हैजा हुनु, श्वास रोग हुनु आदि गर्छ। यसमा उर्ध्व वात रोगको औषधि गर्नु पाचन शक्ति बढ़ने औषधि खानु।

९- पक्वाशयमा वायु भए भुँडी ढाडिनु, भुँडी दुख्नु, मलमुत्र कम आउनु भुँडी गडगडाउनु, ढाडको त्रीकस्थानमा दुख्नु आदि हुन्छ।

१०- गुदागत वायु - मलमूत्र रोकिनु, अधोवायु रोकिनु, भुँडी दुख्नु, पथरी हुनु, तिघ्रो, करंग, पाता, ढाड दुख्नु आदि हुन्छ।

११- इन्द्रीयमा वायु भए नाक कान आदिमा भए बहिरो हुनु गन्ध चाल नपाउनु आदि इन्द्रियको शक्ति हराउँछ।

१२- नसामा वायु प्रकोप भए :- कुप्रो बनाउने, नसा फुलीने, या खुम्चीने आदि बात रोग हुन्छ।

१३- सन्धिगत वायु- जोडनीमा दुख्ने, सुनिने, आदि हुन्छ।

१४- शिराग्रहमा-वायु खूनमा हुनाले घिच्रो बाङ्गिने आदि हुन्छ यो रोगमा

छींक आउने नस सुङ्नु, दशमूलको काढ़ा पिउनु बात नाशक औषधि मालिस गर्नु

१५– हाई गर्ने रोग– यो रोगमा हाई बेसी आउने निद्रा लाग्ने आदि हुन्छ यसमा सुत्नु असल हो।

१६– अनुग्रह, यो रोगमा मुख बन्दको बन्द हुनु अथवा आँ गरेको आँ को आँ नै रहनु अंग्रेजीमा Loco Law भन्दछन्। जिब्रोको शक्ति मर्नु इत्यादि मुख आँ को आँ भए अरू मुख उघारि झट्टै छोड़ी दिनाले मुख ठिकानामा आउँछ यसमा बात नाशक मालिश द्वारा र बातनाशक खाने औषधि प्रयोग गर्नु।

१७– मुक्ता:– यो रोगले मानिस बोल्न बन्द हुन्छ। आवाज हराउँछ, जिब्रोले बोलीनै आउँदैन।

१८– प्रलाप– ध्यर्थको कुरा गरी रहन्छ।

१९– रसाज्ञान– खानामा तितो मीठो स्वाद पाउदैन।

२०– त्वक शून्य– शरीरको छाला चिसो हुने, कड़ा नरमको ज्ञान नहुने चिसो तातोले छुंदा ज्ञन नहुने चिमोट्दा चाल नपाउने इत्यादि।

२१– मान्यस्तम्भ– घिच्रोको पछाडी पट्टिको नशा कक्रीने, घिच्रो यता उता घुमाउन नसक्ने आदि।

२२– बाहु शोषक–कुमको बन्धन सुकाउँछ, पातामा जोडले दुख्छ र अपबाहुक रोग हुन्छ।

२३– अपबाहुक रोग पाखुराको नशामा गएर हात सुकाउँछ यसैलाई डाक्टरहरू पोलियो भन्दछन्। काँधदेखि पाखुरा हातसम्म यो रोगले असर पार्छ। यो रोग भए हात पसार्न खुमच्याउन सक्तैन। कुनै काम गर्न सक्तैन कसैलाई एउटा हात कसैलाई दुई हातमा यो रोग हुन्छ यसकारण राती चिसो पानी पिएर सुत्नु हानि कारक हो। कुनै कारण तिर्खा लागेर पानी पिएमा केही बेरपछि सुत्नुपर्छ।

२४– विश्वाची:– यो रोगले पनि हात चल्न बन्द गर्छ, अपबाहुक रोगझैं नै हुन्छ।

२५– बात अष्ठिला–नाइटोको मुनिपट्टि ढुंगा झैं, लाम्चो ठाड़ो उठेको गाँठो

हुन्छ। यसले गर्दा मूत्र र अधोवायु, टट्टीसम्म रोकिन्छ।

२६– प्रत्यष्ठिला–टट्टी र पिशाब रोके एक प्रकारको गाँठो हुन्छ।

तुली–मलद्वार अथवा मूत्रशयबाट पैदा भएर भुँडी पट्टि उँभो घोच्छ।

२७– प्रति सुनी– भुँडी पट्टिबाट उधो मलद्वार अथवा योनी (लिंग) पट्टी घोचेर आउँछ।

२८– बहुमूत्र रोग– बहुमूत्र भएपछि लाग्ने मान्छेलाई घरी घरी पिशाब आउँछ। स्त्रीजातिको सोमरोग झैं हुन्छ। बहुमूत्र रोग र सोम रोग अलग-अलग हो।

२९– खजाता (पंगुता) कम्करमा वायु कुपित भएर खुट्टाको गेडीदेखि कम्बरसम्मको मोटो नसा तानिन्छ, हिड्दा काँपछ, हुन्छ, पंगू अथवा लुलो हुन्छ।

३०– कलाय खञ्ज–लंगड़ा, भएर हिडछ, हिडदा थरथर काँम्छ, जब हिड्न तयारी हुन्छ त्यस बेला काम्छ।

३१– क्रोष्टुकशीर्षको रोग भए घुडाँको बीचमा स्यालको टाउका झैं गाठो हुन्छ अथवा सुनिन्छ।

३२– खुल्ली– जब वायु तिघ्रा छेपारी, खुट्टामा हुन्छ, अथवा हातमा हुन्छ अरट्ट हुन्छ अथवा काम्छ।

३३– बातकण्टक–यो रोगमा खुट्टाको गेडीमा दुख्छ।

३४– पादहर्ष–यस रोगमा खुट्टा निदाउँछ।

३५– कुबजक–हावको खराबीले गर्दा छाती अथवा ढाँड़ उधो हुन्छ हाम्रोमा यो रोग डाढमा हुनेलाई कुम्ले भन्दछन्।

३६– पाद दाह :– यो रोग भए खुट्टाको पैताला पोल्छ।

३७– तान्द्रा, शरीर भारी (उडनु) अरुचि हुन्छ।

३८– कम्पवायु–टाउको हल्ली रहनु अथवा शरीर हल्ली रहन्छ।

३९– आक्षेपक–हात्तीमा चढ़ेको माहुते झैं हल्ली हरने।

४०– अपतन्त्रक–मुटु, टाउको, कनपट्टीमा दुख्नु। आँखा स्थिर भएर शरीरलाई

धनु झैं झुकाउनु यो रोगी [illegible] पनि हुन सक्छ। Spasmadic concration अंग्रेजीमा भन्दछन्।

४१– अपतानक– यो रोगमा आँखा हेरेको हेरेकै हुन्छ, होश हराउँछ सम्झने शक्ति हुँदैन वायुको कारण घाँटीबाट आवाज आउँछ, जब रोगको असरले मुटुलाई छोडछ तब मात्र होस आउँछ। जब मुटुलाई रोगले आक्रमण गरे फेरि बेहोश हुन्छ यही रोगलाई दारूण पनि भन्दछन्।

४२– दण्डपतानक– यो रोग नसामा पसेर शरीरलाई चिसो अरड्ड बनाउँछ।

४३– धनुस्तम्भ – यो रोगले शरीरलाई धनु झैं झुकाउँछ।

यो रोगमा दांत बांधछ शरीर लुलो हुन्छ, पसीना आउँछ, शरीरको रंग बदलन्छ यस प्रकारको रोगी दस दिन बांचन कठिन छ। धनुस्तम्भमा कोहि अगाड़ी कोहि पछाड़ी झुक्छ।

४४– अन्तायाम :– आँखा अचल हुन्छ, चिउडो अरड्ड हुन्छ, छातीमा दुख्छ खकार आउँछ र धनु झैं निहुरन्छ ।

४५– ब्राहाम, अगाडीपट्टि निहुरन्छ अथवा पछिपट्टि धनु झैं हुन्छ।

४६– अभिघाता क्षेपक–लट्ठिले हिर्काए झैं दुख्छ नसा अरड्ड हुन्छ।

४७– गृधसी :– कम्बरदेखि खुट्टाको गोडीसम्मको नसा दुख्नु खुट्टाको नसा काम्प हुनु अंग्रेजीमा Sciateca भनिन्छ।

यो रोग बात र कफको कारणले हुन्छ।

४८– सर्वांग बात – सबै शरीरमा बात विकार भएर नसा काम्नु जिउ दुख्नु गोड़ा अथवा जोडनी जोडनीमा दुख्न थाल्छ।

४९– आर्दीत रोग :– लकुवा यो रोगले आधा अनुहार बांगीन्छ! अंग्रेजीमा Facial Paralysis भन्दछन्, गर्दन चिउडो दाँत र दुवै आँखालाई असर पार्छ, रोग हुनुभन्दा अघि स्पर्शज्ञान हराउँछ आर्दीत तीन प्रकारको हुन्छ।

५०– पक्षघात–शरीरको कुनै पनि भागमा यो रोग भए शरीरको त्यो भाग निकम्मा गराउछ । यो तीन प्रकारको मानिएको छ अंग्रेजीमा Paralysis भनिन्छ !

वात व्याधिको पूर्ण विवरण जान्ने इच्छुक व्यक्तिले चिकित्सा चन्द्रोदय भाग सातमा पढ्नु होला यो सानु पुस्तिकामा विवरण दिन सम्भव छैन ।

५१- सन्धिबात-हात खुट्टाको जोडनी सुनिनु आदि हुन्छ ।

५२- यसबाहेक खुट्टाको गेडी, औंला, हड्डी, गर्मीको कारणले दुख्नपनि सक्छ चिसो पानी लगाउदा यो रोगमा लाभ भएको थाहा पाइन्छ । कति रोगलाई पिशाबले सेक्दा पनि लाभ हुन्छ ।

## ( वातव्याधिको उपचार )

१- योगराज गुग्गुल औषधि अनुपात अनुसार मानिएको छ ।

२- यो रोगमा (खरैटो) हिन्दीमा बरियार अथवा बरिचारा भन्दछन् । यसको जरा दुई तोला कुटेर चार पाँच तोला पानीमा पकाएर कपड्छान गरी पिउने गरे रोग मुक्त हुन्छ अलिकता नून पनि लगाएर पिउनु ।

३- आर्दीत रोगमा स्येहपान: नस, वात नाशक भोजन, जुलाप, छदाउनु घिउपिउनु, वात नाशक औषधिले मालिस गर्नु, हिंसक जनावरको मासु खानु, हिंसक जनावर को हड्डी घोटेर लगाउनु उत्तम हो ।

४- आर्दीत रोगमा मुख टेढो भए अथवा गुँगा भए वातनाशक औषधि गर्नु ।

५- आर्दीत रोगमा सुनियो भने छदाउनु ।

६- आर्दीत रोगमा जलन हुन्छ भने खून निकाल्नु ।

७- आर्दीत रोगमा मुख आँ गरेको, गरेकै भयो भने अरू कुनै चीजले अरूमुख उधारेर झट्ट निकाली दिनाने मुख ठेकानमा आउन सक्छ ।

८- मासुको रसमा दूध मिलाएर पिउनाने आर्दीत रोग जाती हुन्छ ।

९- आर्दीत रोग वातज छ भने दशमूलको काढ़ा अथवा पञ्चमूलको काढ़ा अथवा खरेटीको जराको काढ़ामा पकाएको दूध पिउनु ।

१०-पित्तज आर्दीतमा सरल उपचार गर्नु घिउलाई काम लिनु घिउ खानु घिउकै मलद्वार द्वारा लगाउनु, नाकबाट दस वर्षको पुरानो घिउ पिउनु ।

११-आर्दीत र लकुवामा कफको दोष भए पुष्टकारक भोजन दिनु ।

१२-आर्दीत र लकुवामा दशमूलको काढ़ा पिउनाले सबै प्रकारको यो रोगहरूमा लाभ गर्छ ।

१३-एक तोला लहसुन पानीसङ्ग पिधेर दुई तोला तिलको तेलमा खाने गरे लाभ गर्छ ।

१४-एक तोला लहसुन घिउमा खाने गरेर सबै प्रकारको रोगहरू जाती गर्छ ।

१५-एक तोला लहसुन लाई एक एक गिलास दूध संग खाने गरे सबै प्रकारको वात रोगमा लाभ गर्छ ।

१६-जुन पट्टिको अनुहारमा आर्दीत रोग भएको छ तेतै पट्टि बाफ लगाउनु भन्ने डाक्टरको भनाई छ ।

१७-कालो धतुराको पात अढ़ाई तोला सेतो लालगेड़ी अढ़ाई तोला कनेरको जरा अढ़ाई तोला सबै मिलाएर पानी लगाएर मसला झैं तीन घण्टा पिध्नु र तिलको तेल लगाएर मधुरो आगोमा पकाउनु। रस डढेर तेल मात्र रहेपछि तारेर यसले मालिश गर्नु ।

१८-एक डेढ़ महिना सँधै (दिनहुँ) अरण्डी को तेल एक तोला एक पाव गाईको दूधमा मिलाएर बिहान बिहान खाने गरे गृधसी उरूग्रह रोग जाती हुन्छ ।

१९-त्रिफलाको काढ़ा र अरण्डीको तेल मिलाई बिहान-बिहान खानाले गृधसी उरूग्रह रोग जाती हुन्छ । अंग्रेजी मा Siactica भन्दछन् ।

२०-घिउ, तेल, अदुवाको रस ज्यामीरको रस बराबर एकै ठाउ गुडसमेत मिलाएर खाने गरे गृधसी उरूग्रह रोग जाती हुन्छ ।

२१-आधा पावा गाईको मूत दुई तोला अरण्डीको तेल (कास्टर आयल) मिलाएर बिहान-बिहान खाने गरे गृसी उरूग्रह जाती हुन्छ । खानु अघि पिपलाको चूर्ण एक आना भरी मुखमा राखेर यो औषधि ले निल्नु ।

२२-महानीम को जराको काढ़ा पिउने गरे गृधसी जाती हुन्छ यसैको लेप पनि गर्नु । महानीम नपाए नीमलाई काममा लगाए हुन्छ ।

२३–दशमूलको काढामा हिंग पोलेर फिट्नु र पोकर (पाहेकर) मूलको चूर्ण मिलाएर खानु Siactica जाती हुन्छ ।

२४–तातो पानीले कुला गर्नु र पिपला र अदुवा मिलाएर चपाउनु र घरी–घरी थुक्नु हनुग्रह रोगमा लाभ गर्छ ।

२५–आधा तोला लहसुन, दुई तोला तिलको तेलमा डढाएर सिंधेनुन मिलाएर खानु अनुग्रह रोगमा लाभ गर्छ ।

२६–दशमूलको काढ़ा पिउनाले हनुग्रह रोग जाती गर्छ ।

२७–गोल मरीच र पिपलाको रस (उमालेर) पिउनाले मान्यत्तम्भ रोग र अनुग्रह रोगमा लाभ गर्छ ।

२८–उरूस्तम्भ रोगमा फिला चल्दैन अथवा शून्य हुन्छ यो रोगमा मह, पिपला र गुड़ मिलाएर खाने गरे असल हुन्छ अथवा गाईको मूतसङ्ग पिपला, गुगुल, सुँठ र सिलाजीत मिलाएर खानु अथवा आँकको जरा मात्र गाइको मूतमा मसिनो पिधेर लेप गर्नु । याद राख्नु पर्ने कुरा यो रोगमा कफ नाशक औषधि गर्नु उत्तम हो ।

२९–खुट्टा पाँसुली फिलाभित्रको हड्डी करकर खाएर दूखेकोमा उनी लुगाको बाक्लो सुरुवाल लगाउनाले पनि लाभ गर्छ यो सजिलो उपाय हो ।

## 'क्रोष्टुक शीर्ष'

१–यो रोगमा घुँडामा सियालको टाउको झैं आकार भएर सुनिन्छ ।

२–चार आना भरी शुद्ध गुगुल माथिबाट तित्रा (तितर) को मासुको झोल पिउनु अथवा फिटेर खानाले रोग जाती हुन्छ । तितर कुखुरा जस्तो हो ।

३–एक पावा गाईको दूधमा अरण्डी को तेल मिलाएर पिउनु ।

४–वातरक्त र यो रोगको औषधि एकै हुन्छ ।

५–विधयरेको चूर्ण दूधसङ्ग पिउनु ।

## 'मान्यास्तम्भ'

१–यो रोगमा घिच्रोको पछाड़ी को नसा अरट्ठ हुन्छ र घिच्रो यता उता घुमाउन सक्तैन ।

२–घिच्रोमा घिउ तेलको मालिश गर्नु र आरण्ड (रेड़ी) को पातले सेकनु अथवा पात तताएर बाँधनु ।

३–कुखुरा को फूल (अण्डा) घिउमा सेधानून फिटेर पकाउनु र तातो तातो सेकनु ।

४–दशमूल अथवा पञ्चमूलको काढ़ा बनाएर नसझैं सुगनु ।

५–अश्वगन्धको जरा घोटेर लेप गर्नु तेलको मालिश र नस सुङनु ।

६–खरेटी को जराको काढ़ा बनाएर पिउनाले पोलिगो अथवा घिच्रो चलाउन नसक्ने रोग जाती गर्छ ।

७–दशमूल को काढ़ा पिउनु ।

## 'आक्षेपक रोग'

१–यो रोगमा हात्तीमा चढ़ेको मानिस झैं हल्ली रहन्छ यो रोग गाईलाई पनि हुँदा हल्ली रहन्छ ।

२–दुई लाल भरह शुद्ध कुचला पानमा राखेर खानु ।

३–महाकाली तेलले मालिश गर्नु ।

## 'अपतानक रोग'

१–यो रोगमा होश हराउँछ बोल्दैन देख्दैन आँखाले देखे तापनि चिन्दैन बोली आएता पनि बेहोश हुन्छ ।

२–दशमूल को काढ़ामा पिपला मिलाएर खानु ।

३–गोल मरीच पिधेर अमीलो दहीं अथवा कागती (नींबू) सङ्ग खानु ।

४–मलद्वार द्वारा घिउ अथवा तेल को पिचकारी (डुस) लगाउनु ।

५–अरण्डी को तेल एक पावा गाईको दूधमा फिटेर खानाले लाभ गर्छ ।

६–यो रोगमा उत्तम जुलाप अरू नै पनि दिनु उत्तम हो ।

७–पिपलाको चूर्ण एक आना भरी परेवाको मासुको झोलसंग खानु ।

## 'अपतन्त्र रोग'

१–यो रोगमा मुटु दुख्छ, उभो रोग बढ़ेर कन्पट्टीमा दुख्छ, शरीरलाई धनुको कमान झैं निहुराउँछ र कम्प छुटाउछ, मुश्किलले सास फेर्न थाल्छ ।

२–यो रोगमा छाद्ने औषधि दिनू हुँदेन, नस सुङ्गाउनु असल हो । नस सुँगाउदा होशमा आउँछ ।

३–हरड़, बोझो (वच) रास्ना, सेंधानून आदि अमलवेत्त बराबर लिएर पिध्नु र छान्नु यो चूर्णलाई घिउ र अदुवा को रसमा मिलाएर चाट्नु ।

४–शुद्ध कुचला दुई लालभरी, कालो धतुराको बियाँ दुई लालभरी पानमा राखेर खानु यो औषधि यो मात्रा भन्दा बेसी खानु हुँदैन ।

## 'धनुस्तम्भ'

१–यो रोगमा मानिस धनू झैं झुक्छ (निउरन्छ) सबै शरीर ढीला हुन्छ पसीना बेसी आउँछ, बुद्धि भ्रष्ट हुन्छ, यस्तो रोगी दस दिन भन्दा बेसी बाँच्न कठिन छ झट्टै उपचार गर्नु असल हो ।

२–पानमा दुइलालभरी अफीम (कानी) राखेर खानाले रोगबाट अवश्य छुटकारा हुन्छ ।

३–सज्झीको तेल मलनु, दशमूलको काढ़ा पिउनु अनि त्यहि काढ़ा नस झैं नाक भित्रसम्म पुग्ने गरा [illegible] रोगबाट मुक्त हुन्छ ।

## 'अन्तराया, बाह्ययामम'

१-यो रोग हुँदा रोगीको आँखाको नानी अचल हुन्छ । चिउड़ो अरट्ठ हुन्छ करंग भित्र दुख्न थाल्छ । कफ (बुखार) को उल्टी गर्छ र पछाड़ी पट्टी धनुको कमान झैं झुके बाह्यान भनिन्छ, अगाड़ी पट्टि झुक्रे रोगमा झैं उपचार गर्नु ।

२-यो दुवै रोगमा आदीत रोगमा झैं उपचार गर्नु ।

३-एक तोला लहसुन दुई तोला तोरी (सरसों) को तेलमा डड़ाएर पिउने गरे रोग जाति हुन्छ, उपचार चाँड़ो गरे असल हो ।

४-लकुवा रोगमा झैं मालिश को तेल बनाएर मल्नु ।

५-डाक्टर को मत अनुसार बिजुली करेन्ट लगाउनु ।

## 'उद्ध्र्व वात'

१-यो रोगमा एकोहोरो डकार आउँछ ।

२-यो रोगमा निसोधको जरा दूधमा पिधेर अडुसेको रस मिलाएर पिउने ।

## 'वातष्ठीशा'

१-यो रोगमा नाभिको मुनी पट्टि गोला झैं गाँटो हुन्छ । उभो पट्टी केही लाम्बो चुच्चे करेला झैं सिधा ठाड़ो हुन्छ, यस रोगले योनी गुदा (मलद्वार) बन्द गरेर मलमूत्र रोक्र सक्छ ।

२-यो रोगमा गानाको झैं औषधि गर्नु ।

३-सज्जी चार आना भरी पुरानो गुड़ चार आना भरी मिलाएर खानु ।

४-दशमूल को काढ़ासा शिलाजीत र मिश्री मिलाएर खाए रोग हराउँछ ।

## 'अध्यमान'

१-यो रोगमा भुँड़ी मसकको थैलो झैं फुलिन्छ ।

२–यो रोगमा पाचक (खाना पचाउने औषधि) खानु हिङ्ग खानु, मलद्वारमा पिचकारी (डुस) लगाउनु, भुँड़ीको मल सफा गर्न औषधि गर्नु ।

## 'प्रत्याध्मान'

१–यो रोगमा पनि भुँड़ी ढाड़िन्छ यो रोगमा छादने, छेर्ने, र पाचन शक्ति बढ़ने (पचाउने) औषधि हिङ्ग त्रिफला, पाचक आदि दिनु ।

## 'विश्वाची'

१–यो रोगमा रोगीले दुवै हात न त फैलाउन सक्छ न खुम्च्याउन सक्छ केहि गर्न सक्तैन ।

२–यो रोगमा बेलुकी खाना खाएपछि खरेटीको जरा दशमूलको काढ़ामा मिलाउनु र साथै तेल र घिउ पनि फिटेर पिउनु ।

## 'जिह्वास्तम्भन'

१–यो रोगमा जिब्रो अरठ्ठ हुन्छ, खान पिउन सक्छ तर बोल्न सक्तैन ।

२–यो रोगमा वात व्याधिको उपचार गर्नु, मान्यस्तम्भ, आदित रोगमा झैं उपचार गर्नु ।

## जँभाई ( हाईकाढ़नु )

१–यो रोगमा हाई आउँछ ।

२–सजिलो ओछ्यानमा सुत्नु ।

३–सुँठो, गोलमरीच, पिपला ज्वानो, सेधानून, पाँचैवटा अलग–अलग पिंधेर मिलाउनु र खानु तेतीबेला नै हाई हाई आउन बन्द हुन्छ साधारण हाई आउनुमा कड़ा चियाँको बड़ीया चिया मरीच लगाएर पिउनाले पनि हराउँछ ।

## 'गद्गदत्व मिनमीन्त्व'

१–बोल्दा तोते बोलीहुनु, शुद्ध शब्द नआउनुलाई मिन्मीनां गूँगा हुनु लाई मुक्ता भनिन्छ ।

२–हरदी, (तिहुनमा खाने बेसार) बोझो, कुट, पिपल, सुँठो, सेतो जीरा अजमोदा (ज्वानो) मुलेठी (जेठीमधु) सेंधानून बराबर मिलाएर कुटनू र राख्नु, दिनहुँ गाईको घिउमा अलिकता मिलाएर चाटने गरे आवाज सफा हुन्छ साथै स्मरण शक्ति बढछ ।

३–दिनहुँ ब्राह्मी (ढुग्रे) झार ४–५ पात उठने वित्तीकै टिपेर खाने गर्नु ।

## 'प्रलाप'

१–व्यर्थको कुरा बड़बड़ाउनु, जरो बेसी हुँदा धकाए झैं धकाई रहनु वैद्यले सन्निपात भन्छछन्, अथवा चिसोलाग्यो भन्दछन् ।

२–सेंधानून (सुँठो) गोलमरीच, पिपला, अमलवेत बराबर मिलाएर पिंधनु यो चूर्ण जिब्रोमा घस्ने गर्नु ।

## 'रसज्ञान'

१–खाएको चिजको तितो, अमिलो, गुलीयो चाल नपाउनु ।

२–यो रोगमा सिंधानून, सुठो, गोल मरीच, पिपला, अमलवेत बराबर मिलाएर पिंधनु र यो चूर्ण जिब्रोमा घसने गर्नु ।

## 'मोच मर्केको'

१–खुट्टा हात कुनै कारणवश मर्कीए यसलाई मोच भनिन्छ ।

२–खुट्टा हिड़दा कुनै कारणले मर्किए तत्कालै सहेर पनि हिडने कोशिश गर्नु नसके कुनै सहारा लिएर पनि हिडनु असल हो । तात्कालै हिड्दा खून (रगत)

जम्न पाउदैन हिड्दा नसा ठीकमा आउँछ मर्कियो भने सेलाउञ्जेन बसेमा खून नसा जाम हुन्छ र दुख दिन्छ । हाथ मर्कीए सहेर चलाई बसे उत्तम हो ।

३–केही बसेर दुःख भए नून पानी उमाल्नु र अलिकता त्यसमा मट्टितेल लगाउनु र तितेपाती को डुकू जम्मा गरी मुठा पारेर चोप्दै सेक्नु ।

४–भुईचम्पा पिंधेर लगाउनु र बाँधनु, लोटे घासको मुण्टो केही जम्मा गरी पिधेर लगाएर बाँधनु । मालिश को तेल, तारपीन, प्याट्रोल, महाकाली तैल आदिले मालिश गर्नु ।

५–खुट्टा मर्कीने वित्तीकै नहिड़े नसा, जामिन्छ र दुःख दिन्छ । फुटबल खेल्नेहरू खुट्टा मर्किए तापनि, सहेर दगुर्छन् र उसको खुट्टा केहि क्षण लंगड़ा गर्दै हिड़ेता पनि जाति हुन्छ ।

## 'वाहुसोस'

१–यो रोगलाई डाक्टरहरू पोलियो भन्दछन् । यो रोगले पातामा आक्रमण गर्छ । पातामा सारो दुख्छ, पछि पुरानो हुँदै गएपछि हात सुक्न थाल्छ ।

२–यो रोगमा खरेटोको जरा (खरेटो हिन्दीमा बरीयार) दुई तोला कुटेर एक पावा पानीमा पकाउनु केही बेर पाके पछि कपड़ाछान गरी अलिकता नून मिलाएर पिउने गरे पन्द्र बीस दिनमा रोग जाती हुन्छ पुरानो रोगलाई धेरै दिन खानुपर्छ ।

३–सखिनसंग दूध, पकाएर खानु, कालो दालमा हिंग र अदुवा लगाएर खाने गर्नु । हिंग र अदुवा नलगाए कालो दालले हानि गर्न सक्छ त्यस कारण अरू बेला पनि कालो दाल खाँदा हिंग र अदुवा लगाएर खाने गर्नु पर्छ ।

## 'पैताला पोल्ने'

१–पैताला पित्तको दोषले पोल्छ हिन्दीमा पैरों का जलन भन्दछन् । यो रोग स्त्रीजातिलाई श्वेत प्रदरले पनि गराउँछ ।

२–यो रोगमा गाईको नौनी घिउ पैतालामा घस्दै आगोमा सेकाए अथवा सुसुरी

को दाल पानीमा पिंधेर त्यो पानी पैतालामा घसे साथै बाल्ने कपूर पनि मिलाएर पिधे झन उत्तम हुन्छ ।

३–प्रदर स्त्रीजाति को योनिवाट भातको माड़ झैं आउछ भने प्रदरको उपचार गर्नु । घरेलु औषधि दोस्रो भागमा उपचार हेर्नु होला ।

## 'गुदा लिङ्ग, योनि दुख्नु'

१–मूत्राशयबाट घोचे झैं दुखेर भुँड़ीपट्टि जाँदै केही शान्त हुंदै फेरि त्यसरी नै दुख्ने रोगलाई तुनी र भुँड़ीपट्टिबाट उँधो मूत्राशयपट्टि अथवा मलद्वार पट्टि दुखेर आउने रोगलाई प्रतितुनी भन्छछन् ।

२–यस प्रकारको रोगमा घिउ तेलको पिचकारी (डुस) लगाउनु तेलमा सिंधेनून लगाएर पिउनु अथवा हिङ्ग खानु या जवाखार पानीसंग खानु (चिम्फीङ)।

३–हिङ्ग ग्यास्टीक चूर्ण रूवामा भिजाएर मलद्वारमा राख्नाले रोग जाती हुन्छ। हिंग मात्र खानाले पनि जाति हुन्छ ।

## 'पादहर्ष' खुट्टा निदाउनु

१–यो रोगमा वातनाशक औषधि गर्दै वातनाशक औषधिले मालिश गर्नु ।

## 'अपवाहुक रोग'

१–यो रोगमा हातको नसाहरू खुम्चन्छ ।

२–यो रोगमा मान्यस्तम्भ रोगको झैं औषधि गर्नु चिसो गर्नु चिसो पानी नसझैं सुगनु र गुगुल प्रयोग गर्नु ।

३–चरेटीको अघि पहिलो रोगमा भने झै दुई तोला पकाएर नून लगाएर खाने गर्नु ।

४–मास तेलले मालिश गर्नु । मास तेल बनाउने नियम चिकित्सा चन्द्रोदय सातौं भागमा पाइन्छ ।

# 'बहुमूत्र रोग' र मूत्र बन्द

१-यो रोगमा पिशाब घरि-घरि आउँछ स्त्रीजाति को सोमरोग झैं एकोहोरो पिशाब आई रहन्छ तर सोमरोग लाग्ने मानिस को बहुमूत्र रोग बेग्लै हो ।

२-यो रोगमा त्रिफला को चूर्ण चार भरी लोहा भस्म आधा लालभरी माउरी को मह मिलाएर चाटने गरे रोग जाती हुन्छ ।

३-अदुवा को रस आधा तोला (अथवा चूर्ण भए पनि हुन्छ) र चीनी आधा तोला मिलाएर खानाले पिशाब रोकिनु जाति गर्छ ।

४-लिङ्गको पिशाब आउने छिद्रमा बाल्ने कपूर धुलो पारेर सलेदो बनाएर लगाउनाले पिशाब हुन्छ ।

५-मुसाको लेड़ जम्मा गरेर पानीमा पिधेर नाईटोको मुनि पुत्रको थैलीको ठाउँमा लगाई दिनाले बालकहरूको बन्द भएको पिशाब खुल्छ ।

६-मुसाको लेड़मा कल्मीसोडा खिलाएर नाभी मुनि लिप्नु पिशाब खुल्छ ।

७-कालो तिल र सक्कर मिलाएर खानाले बेसी पिशाब आउने रोग जाती हुन्छ। स्त्रीजातिलाई हो भने सोमरोगको उपचार घरेलु औषधि दोस्रो भागमा हेरेर गर्नु।

८-खरेटी को जरा चुरणहार, दालचीनी बराबर मिलाएर पिधेर मिश्री मिलाएर खानु, यसमा एक पावा गाईको दूधसंग खाए बहुमूत्र रोग जाती हुन्छ अथवा घरि घरि पिशाब आउन बन्द हुन्छ ।

९-बहुमूत्र रोगमा मेथी (मसाला) को पातको रस दिनहुँ २०० ग्राम दिनु । मेथीको पात घिउमा भुटेर खाए रगत मासी जाती गर्छ ।

# 'त्रीकसूल'

१-त्रीकस्थान खुट्टाको दुइवटा हड्डी र ढाड़को हड्डी जोड़ीएको ठाउँलाई भनिन्छ। यो ठाउँमा दुख्नेलाई डाढ दुखेको भनेर त्रीकशूल भन्दछन् ।

२–यो रोगको लागि आयुर्वेदिक औषधि त्रियोदशांक गुगुल हरीदास एण्ड कम्पनी को सर्वोत्तम औषधि हो ।

३–यो रोगमा वालुवा तताएर सेक्नु ।

४–नस सुंगेर छींक गर्नु, पश्चिमोत्तानआसन गर्नु ।

५–सर्वाङ्ग वात रोग अथवा आर्दित रोगको झैं उपचार गर्नु ।

६–दशमूल को काढ़ा बनाएर बिहानै पिउनाले त्रिकस्थान, ढाड़, मुटुको वायु विकार भएर दुखेको सबै जाति हुन्छ । बिहान काढ़ा बनाएर छानेको छोक्रालाई बेलुकी पनि काढ़ा बनाएर पिउनु ।

७–ढाँढ, दुख्नेमा नरीवल खानाले पनि लाभ गर्छ ।

८–कति जानालाई शरीरमा भित्री गर्मीको कारण पनि ढाँढ दुख्छ गर्मीको कारणले दुखेको थाहा भए चिसो पानी पिउनु धनियाको फाँको लगाएर खुवै चपाएर एक गिलास चिसो पानी पिउनु । यसरी खाँदा लाभ देखे चिसो चिज पिउने गरे रोग जाती हुन्छ ।

९–शकर र नरिवल खानाले पनि, ढाड़ दुख्ने जाती हुन्छ ।

१०–ढाड़ दुख्ने रोगीले हल आसन या पश्चिमोत्तान आसन गर्नु ।

## 'सर्वाङ्ग वात'

१–सबै शरीरमा वात रोग भए शरीरको नसाहरू काम्न थाल्छ जोड़नीहरूमा दुख्छ ।

२–यो रोगमा ज्वानो, गोलमरीच, अफीम मिलाएर पिधनु र कालो तिलको तेलमा घोटेर त्यो तेलले मालिश गर्नु ।

३–चार तोला लहसुन मिहीन पिंधनु सिंधेनून, त्रिकुटा, संचार नून, हिङ्ग सबै चार चार आना भरी मिलाउनु र चार आना भरी अरण्डीको जरा को काढ़ामा एक महीना खानाले सर्वाङ्ग वात जाती हुन्छ । कम्बर, ढाड़ दुख्ने पनि जाती हुन्छ । ढाड़ दुख्ने रोगीले आगोमा ढाड़ सेकनु र टट्टी बस्दा जति सक्यो धोंप्टिनु, सकेसम्म

निहुरेर मलद्वार हेर्ने कोशिश गर्नु पनि उत्तम उपाय हो । कतिले नून भुटेर सेक्के गर्छन् यो पनि असल उपचार हो ।

## 'त्वक् शून्य'

१-यो रोगमा शरीरमा स्पर्श ज्ञान हुँदैन, जहाँ यो रोग हुन्छ चिमोटदा थाहा हुँदैन ।

## विशेष :-

नोट :-अन्य जानकारी को लागि निम्न पुस्तक एक पटक अवश्य हेर्नु होला

| | |
|---|---|
| १-आयुर्वेद सार दर्पण | मूल्य : १२०-०० |
| २-सरल औषधि ज्ञान | मूल्य : ६०-०० |
| ३-घरेलु औषधि भाग-१ | मूल्य : १२-०० |
| ४-घरेलु औषधि भाग-२ | मूल्य : १२-०० |

२. कटेरीको रस एक तोला, अदुवाको रस एक तोला, मह एक तोला मिलाएर गरम पारी यसमा चार आना भरी औषधी दिउसो तीन तीन घण्टामा खाने गर्नु, यस प्रकार खानाले यो रोग जाती हुन्छ। कटेरी नाम हिन्दी हो मारवाड़ी भाषामा रिङ्नी भन्दछन्। नेपालीमा नाम छैन। कसैले जचेड़ो, कसैले बोक्सी काढ़ा जे मनमा आयो भन्दछन्।

## कोष्टगत वायु

१. यो रोगमा भुँड़ीमा वायुको खराबी हुन्छ।
२. भुड़ीमा वायु खराबी भए पाचन शक्ति बढ्ने औषधि खानु।
३. बदामको तेल आधा तोला मह एक तोला दुवै मिलाएर दिनमा दुई पल्ट खानू।
४. हिङ्ग कालो दाल दुई दानाको बराबर खाने गर्नु। केही बेसि खाए पनि हुन्छ।
५. चार आना भरी आकको फूल साँभार नून एक आना भरी मिलाएर दिनहुँ चार पाँच दिन खानाले रोग जाती हुन्छ।
६. वेलको गेड़ा, गिलोय, देवदारू, सुँठो सबै मिलाएर दुई तोला बनाई डेढ़ पावा पानीमा लगाएर काढ़ा बनाउनू र छानेर पिउनू। त्यसले भुँड़ी को वायु नष्ट गर्छ।
७. खाना खाएपछि दुःख दिने वायु दोष भए बिहानै रेड़ीको तेल (तेल जुलाप) एक पावा दूधमा मिलाएर पिउनू।
८. साँभर नून (बिरेनून) एक तोला पिधेर फाँको लगाई पानी पिउनू यसले भुड़ी दुख्ने जाती गर्छ। एक्कासी दुखेकोमा पनि जाति गर्छ।

९. जङ्गी हरारा (छोटी हरड) बिरेनून (कालो नून) सुँठो, तिनै चिजलाई आधा आधा तोला मिलाएर पिधनू र दुई तीन तोला मनतातो पानीमा घोलेर (फिटेर) पिउनू। भुँडी दुख्ने एक घण्टामानैजाती गर्छ।

१०. मुटु करङ्गभित्र स्तनको बीच भागमा दुख्छ भने आकको फूल चार आना भरी विरेनुन (साँभर नून) मिलाएर खानू।

## मलद्वारमा वायु

१. मलद्वारमा वायु कुपित भए अधोवायु रोकिन्छ। भुँड़ी हुँड़लिन्छ पिंडुला, तिघ्रा (फिला) कम्बर कुम दुख्छ।

२. यो रोगमा पनि रेड़ीको तेल (कास्टर आयल) खानू उत्तम हो।

३. मुटुमा वायुको प्रकोप भए सास बढने मुटु दुख्ने इत्यादि हुन्छ, यो रोगमा विहानै तीन दाना गोल मरीच गिलोय मिलाएर दुई आना भरी पिंधेर, गरम पानीसङ्ग खानु अथवा देवदारु (गोब्रेसल्ला) आधा तोला सुँठो आधा तोला पिंधेर कपड़छान गरी गरम पानीसङ्ग खानू। मुटुको रोग धेरै प्रकारको हुन्छ डर लाग्ने भए तित्रा (तितर) नपाए कुखुराको मासुको झोल बनाएर पिउने गर्नु। नरभस झै हुन्छ, हातको औंलादेखि कर कर गर्दै मूर्छा होला झैं भए एक चम्मच मह खानु अनि दिनहूँ विहान उठनेवित्तिकै एक गिलास बासी पानी पिउने गर्नू। पेटमा जुका परेर दुखेको भए जुकाको औषधि खानु। अरु कारण भए बिहान बिहान एक डेढ किलो मीटर हिड़ने गर्नु इत्यादि।

४. कानमा वायु विकार भए कान बहिरा बनाउँछ। कानमा अनेक प्रकार को आवाज आउँछ। कान दुख्छ, कान कराउदा औषधि

चाँडो नगरे बहिरो हुन्छ यो रोगमा एक तोला लहसुन आधा तोला तेलमा डढाएर अङ्गार बनाएर तेल छानेर मनतातो झैं बनाएर लगाउने गर्नु अथवा दुई लाल अफीम कुनै बात नाशक तेल लगाउनु। तेल लगाउँदा दस पन्द्र मिनिट ढल्की बस्नु त्यसपछि मात्र उठेर कानपुछ्नु कान बेसी कोट्याउनाले पनि यो रोग हुन्छ यो रोग हुनेले लामो भाषण गर्नु जोडले धेरै बोल्नु गीत गाउनु हुँदैन। चिसो पानी पिउनु र टाउकोमा टोपी नलगाई बस्नु हुँदैन। साथै स्त्री प्रसङ्ग गर्न हुँदैन।

## सप्तधातुगत वायु

१. यसमा वायु विकार भयो भने छालाको रङ्ग कालो हुने सियोले घोचे झैं हुने आदि हुन्छ।

२. खूनमा वायु विकार भए दुख्ने रङ्ग बिग्रने खानमा अरूचि आदि हुन्छ।

३. वायु मासुमा विकार भएर शरीर भारी हुने लट्ठीले हिर्काए झै दुख्ने शरीर अरट्ठ हुने आदि हुन्छ।

४. बोसोमा वायु विकार भए मासुमा वेकार भए झै हुन्छ तर केही कम्ती दुख्ने खटीराहरू पनि हुन्छ।

५. हड्डीमा वायु विकार भएर जोडनीहरू दुख्छ, निद्रा कमी हुन्छ मासी (हड्डीको बीच) मा वायु त्रिकार भए हड्डी कर कर खान्छ।

## उपचार

१. रसागत वायु विकारमा भए तेल आदिको मालिश गर्नू।

२. छालामा वायु विकार भए तेलमा अफीम फिटेर मालिश गर्नू।

३. खूनमा वायु विकार भए शीतल चीजको लेप गर्नू र जुलाप खानू।
४. मासुमा विकार भए जुलाप खानू, मलद्वार भित्र तेल लगाउनू।
५. हड्डीमा वायु विकार भए चिल्लो चीज मालिश गर्नू चिल्लो चिज खानू।
६. पासुला भित्र करकर खान्छ भने भोटो उनीको सुरूवाल लगाउनू।

## सन्धिमा वायु

१. सन्धिमा जोडनी जोडनी कुइना, घुँडा कुम कुनै पनि हड्डी जोडीएको ठाउँमा दुख्ने, सुनिने भए सन्धिगत वायु भनिन्छ।
२. इन्द्रायणको जरा आधा तोला पिपला आधा तोला गुड एक तोला खानु यसले तिनचार पल्ट जुलाप (पखालो) भई यो रोग जाती हुन्छ।
३. सुँठ आधा तोला, गुगुल आधा तोला, घिउ दुई तोला एकै ठाउँ मसिनो पिंधेर खाने गर्नू।
४. बदामको तेलमा कपूर मिलाएर गरम गरी मालिश गर्नू।
५. योगराज गुगुल, एरण्ड पाक (यो आयुर्वेदिक औषधि) खानु।
६. कालो धातुरोको फल, पात, जरा कुटेर रस निचोरी एक किलो रस र तिलको तेल दुई सय ग्राम, तोरीको तेल दुई सय ग्राम अल्सीको तेल दुई सय ग्राम पाए अरु प्रकारको तेल पनि मिलाएर मधुरो आगोमा पकाउनु सबै रस डढ़ेर तेल मात्र रहेपछि उतारेर कपडामा तारेर बोतलमा लगाएर राखी यो तेलले मालिश गर्ने गर्नू रोगजाति हुन्छ। कुनै पनि रोग लाग्नासाथै उपचार गर्नू, ढिलो गरे रोग जाती पार्न समय बेसी लाग्छ। बात रोग अथवा अरू रोग लाग्दा भूत–प्रेत झारन लगाउनु भूल हो। औषधि गर्नू उत्तम हो।

७. खुट्टाको गाँठो पञ्जा कती ठाउँमा गर्मीको कारणले पनि दुख्छ। यसरी दुखेकोमा मालिश गर्नू हुँदैन चिसो पानीको धारामा भिजाउनु असल हो। अथवा घरी घरी चिसो पानीले भिजाउनू।

८. आधासेर सुर्ती बेलुकी पानीमा भिजाई राख्नु, बिहान पानी तारेर एक पावा तिलको तेलमा पकाउनु पानी डड़ेर तेल मात्र रहेपछि त्यो तेलले मालिश गर्ने गर्नू।

९. यौटा ठूलो चमेरा मारेर खाने तेलमा डुबाएर डढ़ाउनु चमेरा डड़ेर अँगार भएपछि तेल तारेर त्यो तेलले मालिस गर्ने गर्नू।

१०. अदुवाको रस एक सेर खाने तेल आधा पावामा डढ़ाएर त्यो तेलले मालिस गर्नू साथै लहसुन पनि ड़ढ़ाए झन उत्तम हो।

११. धतुरोको पातले तताउँदै सेकनु र तात्ताते बाँधे जोड़नी दुख्ने जाती हुन्छ। यो असल उपचार हो।

१२. ज्वानो कुटेर धुलो पारी महमा मिलाएर बाँधनाले जोड़नी घुँडा आदि दुख्ने जाती हुन्छ।

## बातरक्त

१. यो रोगमा पसीना बेसी आउने, अथवा आउँदै नआउने, शरीर दुब्लो हुने, छाला छुँदा चाल नपाउने, खटिरा निस्कने, सन्धिको जोड़नीहरूमा काटेको जस्तो दुख्ने पोल्ने अथवा एक छिनमा शान्ति हुने इत्यादि अनेक हुन सक्छ। यो रोगमा बात, पित्त, कफ, जुनको प्रभाव बेसी हुन्छ उही अनुसारको रोग हुन्छ।

२. बाख्राको दूध, घिउमा गहुँको पिठो मिलाएर लिपनु।

३. अरण्डीको पात पिंधेर लेप गर्नू अरण्डीलाई कसैले रेड़ी पनि भन्दछन्।

४. अल्सीलाई दूधमा पिधेर लिपनु।
५. तिल भुटेर पिंधनु र दूध मिलाएर लिपनु (दूध बाख्राको असल हुन्छ) न पाए गाईकोले काम लिनु।
६. एक हजार पल्ट चिसो पानीमा धोएको घिउ घसनाले पोल्नजाति गर्छ।
७. गिलोयको रस पिउनाले रोग जाती हुन्छ।
८. गाईको मोहीसङ हरडाको चूर्ण खानाले कफको कारणले भएको वात रक्तमा लाभ गर्छ।

## उरूस्तम्भ

१. उरूस्तम्भ भनेको फिला नचल्ने, अथवा निकम्मा हुनेलाई भनिन्छ। फिलामा चिमट्दा पनिथाहा न हुनु।
२. तोरीलाई महमा पिंधेर तातो बनाई फिलामा मालिश गर्नु।
३. धतुरोको पात महमा पिंधेर फिलामा लिपनु।
४. जुन पट्टिबाट नदी बगेर आउदैछ उतीपट्टि हिंड्नु, पानीले घचेट्दा बलगर्दै हिंडनु यो काम मैदान परेको ठाउँमा बगेको खोलामा हुन्छ।
५. सर्पबस्ने बाँबीको माटो, नीमको पात, तोरी तिनैबटा मसिनो पारेर पिंधनु र बाक्लो गरी फिलामा लिप्नु।
६. मह अथवा गुड़सङ मिलाएर पिपला खानु।
७. गाईको गौतसङ अथवा दशमूलको काढासङ शिलाजीत, गुगुल र पिपला सुँठ मिलाएर खानू।
८. आँकको ज.ा गाईको गौतसङ अथवा दशमूलको काढासङ शिलाजीत, गुगुल र पिपला सुँठ मिलाएर खानू।
९. कफ नाश गर्ने औषधिले यो रोगमा लाभ गर्छ।

# शूलरोग

१. शूलरोग त्रिशूलले घोचेझै दुख्नेलाई अथवा केही चीजले घोच्नेलाई भन्दछन् अथवा शरीरभित्र काँढाले घोचे झै हुन्छ।

२. शूलरोग बात, कफ, पित्त, आमशूल, अन्नद्रव आदि धेरै प्रकारले हुन्छ। बातज शूलमा गरम बोतल, हट्व्याग आदिले सेक्नू लाभ गर्छ। कफज शूलमा छदाउनू छेराउनू पनि उत्तम हो।

३. एक तोला हिङ्ग एक तोला सेधानून पिंधनू र आठ तोला तेल र बत्तीस तोला गाईको मूत मिलाएर पकाउनू। तेलमात्र रहेपछि उतारेर केही मात्रा नाभिमा लगाउनू बात र कफ शूलमा जाती गर्छ।

४. धानको भूस, पानी तिल पिंधेर गरम पारेर सेकनू वात र कफ शूल जाती गर्छ।

५. हरड, वेहडडा, अमला (त्रिफला) सङ रायो बराबर मिलाएर पिंधनू र छान्नू आधा आधा तोला खुराक बनाएर घिउ र मह दुई चीज केही वेसी कम्ती मिलाएर खानू। घिउ र मह बराबर नपार्नू। प्राय: सबै प्रकारको शूल रोग जाती गर्छ।

६. हरड पिंधेको आधा तोला र घिउ एक एक तोला मिलाएर खानाले शूलरोग जाती हुन्छ। नोट— हरड, हडडा एकै चीजलाई भनिन्छ।

७. सुटो (सुँठ) हरड कालोनून (विरेनून) तिनैवटालाई चन्दन घोटे झै पारेर पिंधनू र कटौरामा पचास ग्राम पानी मिलाई तताएर खानू एबै प्रकार को शूल यसले जाती गर्छ। एक दुई पल्ट टट्टी हुन सक्छ।

८. ज्वानो, सेधानून, हरड, सुँठो, इनीहरू बराबर बराबर मिलाएर चूर्ण बनाउनु। यो चूर्ण आधा तोला तातो पानीसङ खानु।

९. त्रिफलाको चूर्ण र मिश्रीको धूलो मिलाएर खानाले सबै प्रकारको शूलरोग जाती गर्छ।

११. शूलरोग वायुको कारण हो भने हिंगले उत्तम काम गर्छ, भुड़ी ढाड़ीएकोमा पनि राम्रो काम गर्छ।

१२. अपचको कारण हो भने नं० ९ र न० १० को औषधि प्रयोग गर्नु।

१३. एक प्रकारको शूलरोग जसलाई हामी गानो भन्छौं, अदुवाको रसमा रोटीमा खानेसोडा आधा चिया चमच गोलमरीच पिंधेको अलिकता गरम पानीमा लगाएर पिउनाले लाभ गर्छ। यो रोगमा मुदु दुखेर फत्रक फत्रक पर्छ, नाभिमा उतानो सुताएर थिचीहेरे भित्रबाट हिर्काउदै गर्छ, रोगीलाई साह्रो दुख्छ तर रोगीले सहनुपर्छ यसरी बिस्तार बिस्तार जोड दिंदै थिच्दै जाँदा ढक–ढक हिरकाउन कम हुँदै जान्छ, जब ढक–ढक हिर्काउन हराउँछ, अर्को हातले रोगीलाईगर्धनमा अंगालो मारेर उठाउनुभुडीको हातहटाउनु हुँदैन उठेपछि दुवै घुँडा जोडाएर अँगालो लगाउन लगाई च्यापु घुडामा राखेर घोप्टोपर्न लगाई केही बेर राखी तातो चिया अथवा केही खान दिनु पाँच दस मिनिट बादमा बिस्तारै उठन लगाएर चौकी तथा केहीमा बसेपनि वा विस्तारै विस्तारै हिंडे पनि हुन्छ, रोग तत्कालै जाती हुन्छ। अरू बेला यस प्रकारको रोगीले उत्तानो सुत्न हुँदैन। नाभीमाथि दुख्यो भने माथितिर थिच्नु हुँदैन, नाभीमा बाँधे हुन्छ। एकलै भएको बेला दुख्यो भने सीधा खुट्टा पसारेर बसेर नाकले घुँडा छुने कोशिश गर्नु।

१४. यो रोगमा तरवारे फूलको जरा लहसुन जस्तो हुन्छ यौटा पचास ग्रामको अन्दाज बिहानै कुटेर पानीमा फिटेर कपडछान गरी पिउनाले पनियो रोग जान्छ। तरवारे फूल वीजो जस्तो पतला

पात हुन्छ मसीनो रातो–रातो हाँगैहाँमा फुल्छ स्यूडी फूल पनि यस्तै हुन्छ तर पात बाक्लो र फूल ठूलो ठूलो हुन्छ यो फूल प्राय: बाँझो डिलतिर आफै उम्रेको पाइन्छ। कतीले खुट्टाको बुढी औंलामा कालो धागो बाटेर बाँधेको पनि देखिन्छ।

१५. ज्यामीरको जरा पानीसंग कुटेर छान्नु र झोलमा घिउ मिलाएर खानु । शूल रोगमा लाभ गर्छ।

१६. वायु शूलमा रक्सी पिउनाले पनि लाभ गर्छ तर सधैं पिउन हुँदैन औषधिको लागि मात्र प्रयोग गर्नु।

१७. पित्तज शूलमा चिसो पानी काँसाको भाँडामा लगाएर दुखेको ठाउँमा राख्नु लाभ गर्छ । चिसै पानीले नुहाउनु।

१८. अमलाको रस चीनी मिलाएर चाट्नाले पित्तज शूलमा लाभगर्छ।

१९. अमलाको रसमा मह मिलाएर चाटनु लाभ गर्छ।

२०. हडड पिंधेर चार आना भरी चूर्ण गुड मिलाएर खानु पित्तज शूलमा लाभ गर्छ।

२१. दोस्रो भाग घरेलु औषधिमा बुहारी झारको गुण पढ्नु होला।

२२. डाक्टरको बाट स्याज्मो शिवालजिन अथवा बेलारगन एक टिकिया ल्याएर खाए केही लाभ गर्दछ।

२३. गर्भवतीको भुँडी दुख्नेमा तुलसीको १२ बटा पात कालोनून ५० ग्राम अन्दाज हिंग तीस ग्राम अन्दाज पिंधेर दुई खुराक बनाएर खानु।

२४. गर्भवतीको पेट फुलीयो (ढाडियो) भने हिंग र कालोनून मिलाई घस्नु।

१. बातजशूल, मुटु, कमर, करङ्ग, पीठ, मूत्राशय आदिमा सियोले घोचे झै गर्छ।

२. पित्तजशूल, नाभिमा शुरू भई तिर्खा, जलन, सुनिनु बेहोशी आदि हुन्छ।

३. कफजशूल, भुडी दुख्नु, डकार आउनु, अन्नमा अरूचि हुनु आदि हुन्छ।
४. आम्मशूल, शरीर भारी हुनु, हाई आउनु, कफ आउनु, यो शूल भुडीबाट शुरू भएर कोखा, मुटु, करंग भित्र दुख्नु आदि उपद्रो गर्छ।
५. खाना पचने बेला दुख्नेलाई अन्न द्रवशूल भन्दछन् ।
६. कोखामा दुख्नेलाई कुमारेस (Qumares) खानु उत्तम हो यसले (Liver) कलेजो दुख्ने पनि जाती गर्छ। कतिले भुडीको रोगमा विखुमा पनि खान्छन् यो पनि उत्तम औषधि हो। तर बिखुमा खाएर जाँड, रक्सी आदि झट्टै खाए मृत्युका मुखमा पर्छ! र यो औषधि खानेले पाँच सात घण्टा जाँड़, रक्सी खानु हुँदैन।
७. मुटु दुख्नेलाई काँसको बटुकामा चिसो पानी एक मुख लगाएर अलिकता खुबै उड़ेको खरानी अलिकता नून लगाएर फलामको कर्द छुरी केही चीजले एक छिन चलाएर त्यो पानी पिउनु बालकहरूलाई धेरै लाभ गरेकोछ।

## आमबात

१. यो रोगमा अग्नि कमजोरी हुनाले खाएको रस बनेर खूनमा परिणत हुँदैन अर्थात खून बनिन्दैन। वायु सन्धि (जोडनी) मा पसेर जोडनी, त्रिक स्थान दुख्नु र शरीर अरट्ट पार्नु, अरूचि, तिर्खा, अल्छीलाग्नु, जरो शरीर भारी हुनु, खाएको अन्न नपाकेर (नपचेर) शरीर सुन्नापन हुनु, सुनिनु हुन्छ। घिच्रो अरट्ठ हुनु आदि हुन्छ।
२. यो रोगमा छादने, छेर्ने, पसीना निकाल्ने औषधि यो उपाय गर्नु। यसो गर्नाले सरल उपचारले लाभ हुन्छ। दुख्ने ठाउँमा बलुवा तताएर सेक्नु।
३. सुँठो, गोलमरीच, पिपला, दारीम (अनारदाना) र सेधानून मिलाएर

पिंधेर पानीमा मिलाएर पिउनाले त्रिकस्थान दुखेको आदिलाई लाभ गर्छ ।

४. कचूर, सोठ मसिनो पारेर पिंधनु र पुनर्नवाको जराको काढा बनाएर त्यो अन्दाजले खाएर माथि यो काढा पिउनु यसले आमबात, गठिया, निश्चय जाती हुन्छ।

५. पिपलाको चूर्ण लगाएर दशमूलको काढा पिउनु।

६. तीनवटा काढा हुने सिउँडी (सेहुड) को दूध नून मिलाएर दुख्ने ठाउँमा लगाउनाले आम बातको दुःखाईमा लाभ गर्छ।

७. जसरी रेडीको तेलमा सुँठ मिलाएर पिउनाले पखालो जान्छ त्यसरी नै रेडीको तेलमा दूध मिलाएर पिउनाले जुलाप (पखालो) हुन्छ र आम बातमा लाभ गर्छ।

८. स्त्रीजातिलाई नानी जन्मिएपछि खून सफा न भए रक्तज गानो हुन्छ। यो स्त्रीजातिको गानोको उपचार एघार महीना बाद मात्र गर्नु भन्ने चिकित्सा चन्द्रोदय भाग पाँचमा लेखिएको छ। पहिला छदाउने औषधि दिनु त्यसपछि ढाकको तार (खार) सङ पकाएको घिउ पिउन दिनु अथवा रक्त गुल्म फुटेपछि पहिलो भाग घरेलु औषधिमा लेखेझै रक्तप्रदरको उपचार गर्नु!

९. चार आना भरी अदुवाको रसमा रोटीमा खाने सोडा चार आना मिलाएर खाए गानो दुख्नेमा लाभ गर्छ।

१०. हिङ्ग ग्यास्टीक चूर्ण (आयुर्वेदिक औषधि हो) अथवा अरू कुनै पाचक सङहिङ्ग मिलाएर खानाले गानोमा लाभगर्छ । अरू पाचक नपाए हिङ्गमात्र खाए पनि हुन्छ। यसले पनि लाभ गर्छ।

१. यो रोग मलद्वारको हावा, टट्टी, पिशाब, हाई, आँसु, छिक, डकार, उल्टी, वीर्य, भोक, तिर्खा, सास, निन्द्रा, यी तेह्रवटा वेग कुनै पनि रोकनाले हुन्छ।

२. मल रोकनाले भुड़ीमा गड़बड़ हुनु, पाकस्थली दुख्नु, अमिलो डकार आउनु आदि हुन्छ ।

३. मूत्र रोकनाले मूत्रासयको थैलीमा दुख्नू, पिशाब तकलीफले हुनु टाउको दुख्नू आदि हुन्छ। यो रोगमा रक्सीमा बिरेनून फिटेर खाए असल हुन्छ। अथवा अलैची पिंधेर रक्सी, दूध अथवा पानीमा फिटेर खानु। अथवा काँक्राको बियाँ या बोझो घोटेर पानीमा मिलाएर पिउनू। दूधमा फिटेर पिए पनि हुन्छ या उखुको रस दूधमा फिटेर मिश्री मिलाएर पिउनू। या मूत्र पथरीको औषधि खानु।

४. हाई, डकार आदि रोकनाले घिच्रो घुमाउन नहुने आँखा, कान नाक आदि दुख्न सक्छ। यो रोगमा बातनाशक औषधि गर्नु।

५. आँसु रोक्नाले आँखा दुख्न या पिनास रोग हुन सक्छ यो रोगमा पूरा आँसू निकाल्ने उपाय गर्नु र आनन्दलॆ सुत्नु।

६. छिक रोकनाले घिच्रो पछाड़ीको मान्यस्तम्भको नसा कड़ा हुन्छ, टाउको दुख्ने आधा कपाल दुख्ने, लकुवा अथवा आधा अनुहार टेढो हुने आदि कठिन रोग हुनसक्छ । यस कारण रूघा लाग्दाको छिक बाहेक अरू बेलाको छिंक रोक्नु हुँदैन। यो रोगमा कड़ा नस सुँघनु, अथवा घामपट्टि फर्केर लुगा अथवा सलेदो तिखो बनाएर नाकमा घुसारेर छिक काड़नु।

७. उल्टी, छाद रोकनाले शरीर पोल्ने, खानामा अरूची, सुनिने कोड़, शरीर पहेंलो हुने, जिउ चिलाउने आदि रोग हुन्छ। यो रोगमा ज्वारखार (चिम्फीङ्ग) र सिधोनून बराबर मिलाएर पिंधनू न र तेल मिलाएर मालिसगर्नु यो रोगमा छदाउनू, जुलाप खानु, शरीरमा तेलमालिस गर्नु लाभदायक हो। एक भाग दुध र चार भाग पानी मिलाएर उमाल्नू पानीजती सुकेर दुधमात्र रहे पछि त्यो दुध पिउनू।

८. वीर्यजनित उदावर्तमा स्त्री प्रसङ्ग गर्दा जाँदै गरेको वीर्य रोके पिशाब रोकीनू, वीर्य पथरी हुनु, भगन्दर (फिस्टुला) बवासिर (पायल्स) आदि रोग हुन्छ। सुजाकझै यो रोग अनेक हुनसक्छ । यसमा चिसो पानीले नुहाउनु, तेलको मालिस गर्नु, वीर्य रोक्दा भएको रोग झट्टै चाल पाउनू साथै सुन्दर स्त्रीप्रसङ्ग गर्नु, केहि समय बितेर रोग भए रोग अनुसार उपचार गर्नु।

९. भोग रोक्दा, तान्द्रा, अरुची, शरीर भारी हुने, यसमा चिल्लो रूची हुने पदार्थ (खाना) कम्ती खाई, सुगन्धित फलफूलहरू सुँघनू।

१०. तिर्खा रोक्दा हुने उदाबर्तमा छात्ति दुख्ने, कम सुन्ने, गला मुख सुकने आदि हुन्छ। यसमा शीतल उपचार गर्नु अथवा चिसो चिज पिउनू।

११. सांस रोक्दा हुने उदावर्तमा मुटु दुख्ने, मूर्छा, भुडी दुख्ने आदि हुन्छ। यसमा मासुको रससङ भोजन गर्नू।

१२. निद्रा रोक्दा हुने उदावर्तमा हाई आउने, शरीर भारी हुने, तान्द्रा, आँखा भारी हुने आदि हुन्छ। मिश्री मिलाएको गरम दूध पिउनु, आनन्दले सुत्नू ।

१३. जवाखार, सोठ, गोलमरीच, पिपला बराबर मिलाएर चूर्ण बनाउनू, यसमा चार आना भरी अन्दाज अलिकता घिउ मिलाएर खानाले स्त्रीजातीको रक्तज गानो (गुल्म) जाती गर्छ।

१४. घिगवारको रसमा अलि अलि नून, सुठ, पिपला, गोलमरीच मिलाएर खानाले रक्तज गानो जाती हुन्छ।

## प्लीहा

१. फियोको रोग, छात्तीको देब्रेपट्टि कोखामा हुन्छ, यो रोग बढ्दा

शरीर कमजोरी हुने शरीरमा खून नहुने, खाएको नपच्ने, हल्का–हल्का ज्वरो हुने अथवा एकुन्द्रो (ज्वरो) हुने, फियोको ठाउँमा दुख्ने आदि हुन्छ।

२. फियोमा दुख्छ भने गरम लुगाले बाँध्नु, तातो पानीको बोतलले अथवा हट्वाटर व्यागले सेकनु।

३. पिपलाको चूर्ण बनाएर दूधसंग अथवा गुड़संग मिलाएर खानाले फियोको रोग जाती हुन्छ। पिपला फियोको रोगको लागि उत्तम औषधि हो पिपला गोल र लाम्चे दुई प्रकारको हाम्रो लागि पहाड़मा हुन्छ, दोकानमा किन्न पनि पाइन्छ।

४. बड़डडा र बिरेनून (कालोनून) बराबर मिलाएर धूलो पारेर तातो पानी सँग खानु ।

५. खूबै पाकेको आँपको रसमा मह मिलाएर खानाले रोग जातीगर्छ।

६. आकको पातको चूर्ण बनाएर पुरानो गुडमा मिलाएर खानाले फियोको रोगमा लाभगर्छ। चूर्ण दुइआना भरीको खुराक गुड दुई तोला गर्नु।

७. लहसुन, पिपरामूल हडडा चूर्ण बनाएर एक चियाचमच खाएर गाईको गौत पिउनाले रोगमुक्त हुन्छ।

८. नौसादर तीन लालदेखि पाँच लालसम्मको मात्रा (खुराक) बनाएर पाकेको मेवासङ खानाले फियो बढेको जाती गर्छ।

९. कागतीको रस डेढ तोला प्याजको रस डेढ तोला दुवै मिलाएर दिनहुँ चौध दिन खानाले रोगबाट छुटकारा पाउछ। तर खाना हल्का हल्का खिचडी आदि नरम चिज खानु।

१०. केटाकेटीको फियो बढ़ेकोमा गलामा पियाज एक दुई दाना उनेर मालाझै लगाई दिनु ।

११. आफ्नू पिशाब अथवा आफ्नू छोराको पिशाब एक [illegible] (एक हातको हतकेला भरी) सँधै पिउनाले फियो जाती हुन्छ।

१२. सुहागा पोलेको एक भाग रायो तीन भाग मिलाएर पिंधनु र अलि–अलि चाटले गर्नु रोगमुक्त हुन्छ। नोट–सुहागा सुन विलाउने हो।

## कलेजोको रोग

१. कलेजोलाई अंग्रेजीमा लिभर भन्दछन् , वास्तवमा डाक्टरहरूले खाना न पचे, कलेजो दुखे, पाचनशक्ति कमजोर भए इत्यादि अनेक भुड़ीको रोग लाई लीभर कम्पलेन बताउँछन्। तर आयुर्वेदिक मत अनुसार यो सब बेग्लाबेग्लै उपचार द्वारा जाति पार्न सकिन्छ, वास्तवमाा कलेजोमा पित्तको थैली टासिएको हुन्छ र खाना खाएकोमा थोपा–थोपा मिल्दा–मिल्दा यसले पचाउने काम गरेको कारण लीभर कम्पलेन भन्दछन् वास्तवमा कलेजो फुलिएकोलाई मात्र लीभर भन्न सुहाउँछ । कतिबटा मूर्ख डाक्टरहरूले कलेजोलाई जोड़संग औंलाले दबाएर यहाँ दुख्दछ? भनी रोगीलाई सोधेको देखेको छु। कलेजो नरम शरीरको अंग हो, यस कारण कुनै डाक्टरलाई यसरी दबाउन दिन हुदैन। लीभरजेन लीभ फिफ्टी टू लिभोजन आदिअनेक औषधि भन्दा उत्तमयो रोगको लागि कुमारेस यो औषधि बंगाल रिसर्च एण्ड केमिकल लेबोरेटरी प्रा० लि० द्वारा गौराङ्गा घाट रोड, पानीहाटी चौबीस पर्गनाको हो । यो लीभर (कलेजो) फियो दुवै रोगमा उत्तम औषधि, हो, यसको बराबर एलोपैथिक मा अरू औषश्चि पाइन्दैन ।

२. कलेजो सुनियो अथवा सुक्यो भनेभुड़ी दुख्छ, टट्टी कड़ा हुन्छ

दाहिने–पट्टि कोखामा सियोले घोचेझै दुख्छ। यसमा चक्रासन गरे उत्तम हो।

३. कलेजो सुनिएर दुःखेमा तारपीनको तेल हल्का मलेर सेक्नु। रायो पिधेर लेप गर्नु। अथवा दुई लाल नौसादर (सुन उज्याल्ने) एक लॉल लोहा भष्मलाई चार आना भरी पिपला पकाएको काडामा मिलाएर खानु।

४. पिपलाको काढा आधा सेर पानीमा पिंधेको पिपला दुई तोला, गाईको दूध आधासेर घिउ एक पावा मिलाएर पकाउनु, सबै डढ़ेर घिउमात्र रहे पछि निकालेर विहान बेलुएी एक–एक तोला खानेगरे रोग जाती हुन्छ धेर दिनको लागि एकै चोटी औषधि तयार गर्नु परे माथिकै मात्रालाई दुई गुना, चार गुना जति बनाउनु छ बढ़ाएर बनाए हुन्छ।

५. कलेजो फुलियोको दुख्नेछ र डकारदा केही सञ्चो हुन्छ अथवा कलेजो को रोगीले चक्रासन र वामदेवासन गरे उत्तम हो। दूध र पानी मिलाएर पिउने गर्नु। यो रोगमा हर्दी (बेसार) खान हुँदैन।

६. दुइ तोला त्रिफला बाह्र तोला पानीमा पकाई तीन तोला पानी रहेपछि उतारेर छान्नु, चिसो भएपछि मह मिलाएर खाए पित्तको खराबीले भएको कलेजाको रोग जाती हुन्छ।

७. तिते करेलाको फलको अथवा पातको रसमा मह मिलाएर खानेगरे रोग जाती हुन्छ। तिते करेलाको धेरैने गुण हुन्छ करेलाको विवरणमा पढ़नु होला।

## मुटुको रोग

१. मुटु दुख्ने बीमार मुटु घोच्ने केहि चीजले काटेझै दुक्ने अनेक प्रकार हुन्छ।

२. यो रोग पित्त,को कारण भए, ग्लानि, तिखा, केही [illegible] (पोलेझैं) सियोले घोंचेझै, गलाबाट तातो बाफ निक्लेझै, मूर्छा, पसीना आउने आदि हुन्छ। कफको कारणले भएकोमा मुटुमा गन्हुङ्गपना, खकार निकल्ने अरुचि हुने, खाना नपचने, मुखमा गुलियो हुने आदि हुन्छ। कृमी अथवा जुका आदि भुडीमा कुनै प्रकारको किराहरू भए चिथोरेझै दुख्ने, चिलाउने, अरूचि हुने, आँखामा अँध्यारो भएर आउने, आँखा सुनीने आदि हुन्छ ।

३. मुटुको रोगीलाई खाना रूचने र रगत बढ़ाउने आहार दिनु।

४. बातज मुटुको रोगीलाई मासु, दूध, घिउ, दिए असल हो।

५. पित्तको कारण भएको मुटुको रोगीलाई मुलेठी, जेठीमधु को काढा बनाएर मह, गुड़, चीनी आदि मिलाएर दिनू। छदाउनू छेराउनू पनि उत्तम हो।

६. कफको कारणले भएको मुटुको रोगीलाई पसीना निकाल्ने औषधि दिनू, छदाउनू, छेराउनू । यो रोगमा बोझो र नीमको काढा दिनू असल हो।

## मुटु रोगको उपचार

१. मुटु दुखेर फत्रक फत्रक पर्दैछ र केही उपाय नभए झट्टै काँसको बटुकामा खूबै डढेको खरानी आधा चियाचमच अलिकता नून एक मुख अथवा दुई मुख हुने चिसो पानी लगाएर चक्कु, कर्द हसिया अथवा कुनै फलाम को चीजले एक डेढ़ मिनेट चलाएर पिउनू । हाम्रो पहाडमा हिंग चिम्फींग, फच्यांग खाए पनि लाभ गर्छ, एक चमच घिउनै खाए पनि लाभ गर्छ, मुटुको दुखाईमा झट्टै उपचार गर्नु असल हो।

२. पित्तको कारणले मुटु दुःखेमा मह र मिश्री मिलाएर मुनक्कासंग खानू।

३. हडडको चूर्ण मिश्री मिलाएर खाएर पानी पिउनू ।

४. कुटकी र मुलेठीको चूर्ण अलिकता खाएर पानी पिउनू

५. कुट्की, मुलेठी, मिश्री चूर्ण बनाएर पानीसंग खानू।

६. मुलेठीको चूर्ण दूधमा पकाएर खानू अथवा मृगको सिंगको मध्य महसंग खानू अथवा असली मोती गुलाबजलसँग खानू।

७. अर्जुन रूखको बोक्रा दूधमा पकाएर मिश्री मिलाएर खाए हर प्रकारको मुटुको रोग जाती गर्छ। अर्जुनको रूख मधेशमा हुन्छ। यो मुटुको रोगको उत्तम औषधि हो।

८. गुड़को शर्बतसंग अर्जुनको बोक्राको चूर्ण खाए पनि हुन्छ।

९. दाख चार भाग, मह तीन भाग, घिउ दुई भाग मिलाएर केही दिन खानाले मुटुको रोग जाती हुन्छ।

१०. पोहकर मुलको चूर्ण मह मिलाएर चाटनाले पनि मुटु दुख्ने जाती गर्छ।

११. यसबाहेक कतिलाई डर लाग्ने बीमार हुन्छ, यो रोगमा मानिस ऐले मर्छु कि केपो हुन्छ कि घरपो लडेर थिच्छ कि आदि अनेक डर हुन्छ, यो रोग मुटुको होइन दिमागी रोग हो कारण मुटु र दिमागको सम्बन्ध हुनाले यस प्रकारको डरलाग्ने रोग हुन्छ । यो रोगमा तित्रा (तितर) कुखूराझै मधेशमा पाइन्छ तितरा न पाए कुखुरा नै भए पनि हुन्छ। यस्को मासु १५–२० दिन खानाले रोग जाती हुन्छ।

१२. कफको कारण मुटु दुःखेकोमा छोटी अलैची (सुक्मेल) अथवा हाम्रो पहाड़को अलैचीको दाना मसीनो पिंधेर पिपरामूल र घिउ मिलाएर चाटनु, यो चूर्ण आधा आना देखी एक आनासम्मको खुराक बनाएर खाए हुन्छ।

१३. पिपला, छोटी अलैंचीलाई घिउसंग खाए पनि हुन्छ छोटी अलैंची नपाए हाम्रो पहाड़को बड़ा अलैचीलाई काम लिन सकिन्छ।

१४. कृमीको कारणले मुटु दुखेकोमा जुकाको औषधि खानू अथवा चुर्ना नामले आदिको औषधि गर्नु।

१५. मुटुको रोगको जादू झै औषधि दाख चार भाग मह तीन भाग घिउ दुई भाग मिलाएर केहि दिन सेवन गर्नाले यो रोगबाट निश्चय छुटकारा पाइन्छ।

१६. पोहकर मुलको चूर्ण महमा मिलाएर चाटने गर्नु पनि उत्तम हो।

१७. मुटुको रोग नर्बस हुने हातको कान्छि औंलादेखि करकर खाएर आउने दस आठ माइल उकालोमा कुदेर आउँदाझै लल्याक लुलुक हुने आदि भए नारी चलेको आफैले छामी हेर्नु । बालकको उमेर अनुसार ८०–८५ पल्ट, जवानको ७५–८० पल्ट, बृद्धको ७०–७५ पल्ट एक मिनिटमा चल्नुपर्छ यदि पूरा थकाई मारेर हिड डुल नगरी नै नारीको गती १०० अथवा त्योभन्दा बेसी चल्छ भने शरीरमा गर्मीको कारण रोग भएको जानेर मह चिसो पानीमा शर्वतझै बनाएर पिउनु, सधैं सुत्ने बेलामा एक गिलास पानी राखेर सुत्नु बिहान उठने साथै पिउने गर्नु। यो उत्तम औषधि हो, मानिसको शरीरमा जती गर्मी हुन्छ उति नाड़ी बेसी चल्छ जति सर्दी हुन्छ उति ढिलो नाडी चल्छ। सारै बुढोको नाडी चौंसठ पल्ट र कोक्रो को बालकको सय पल्ट चल्छ, यसैमा उमेर अनुसार हेर्नू ।

## मुत्रकृच्छ्र

१. यो रोगमा पिशाब गर्दा दुख्छ, पिशाब थोपा थोपा आउँछ, अथवा पिशाब गर्दा पोल्छ, कसैको खून (रगत) मिलेर पिशाब आउँछ, नाभी मुनी मूत्रनली अथवा फिला आदि दुख्नू यो रोगको पहिचान हो।

२. यो रोगमा कुरकुरेझार पानीमा कुटेर मिश्री मिलाएर पिउनु झार १०० ग्राम जति एक गिलास पानीमा कुटेर फिटे हुन्छ। यो झारलाई कसैले आँखले कसैले वरकुले, कसैले खसखस्रे, कसैले रामटोक्रे आदि भन्दछन् हिन्दीमा यस झारलाई सोमकल्पलता भन्दछन् । यो झारको पात हुँदैन, केहि चिसो ठाउँमा हुन्छ। आँखा आँखा जोडिएको हुनाले रामटोक्रे आँखले फेदमा बरकुला झै गेडा हुनाले बरकुले भन्दछन् । यो पिशाबको रोगको उत्तम औषधि हो साथै सास बढने (एजमा) को पनि रामबाण औषधि हो। घरेलु औषधि दोस्रो भागमा पढनु होला।

३. धनियां चिसो पानीमा भिजाएर राख्नु चियाको रङ्ग झै आएपछि छानेर मिश्रीसंग फिटेर पिउनु अथवा इसबगोलको भूसी एक चमेच बेलुकी मिश्री लगाएर एक गिलास पानीमा भिजाई राख्नु बिहान उठनेवित्तिकै यौटा दाना निबू (कागती) काटेर रस निचोरेर लगाईकन फिटेर पिउनु कागतीको गेडा निकालेर फ्याँकनु गेडा खान हुँदैन । यस प्रकारले १०–१२ दिन खाए रोग सधैंको लागि जाती हुन्छ। यसले हरीद्र प्रमेह पनि जाती गर्छ।

४ बाटोमा हिडदा पिशाबमा जलन भए चिसो पानीमा लिङ्ग र अण्डकोस पूरा भिजाउनू सकभर चिसो पानीमा डुबाएर केहि बेर राख्नु चिसै पानी पिउनु तुरुन्तै लाभ गर्छ अथवा आधापाउ रक्सी यो एकप्याक ब्राण्डीमा पूंरा गिलासभरी पानी लगाएर अलिकता नून लगाई फिटेर पिउनु।

५. छोटी अलैचीको चूर्ण केराको बोट निचोरेर निकालेको पानी एक गिलास र मिश्री फिटेर खाए लाभ गर्छ।

६. कचेड़ाको पात आधा तोला कुटेर एक गिलास पानीमा मिश्री मिलाएर फिटेर लुगामा छानेर पिउनु ।

७. पाखनवेत हिमालयमा हुन्छ, यसलाई हिन्दीमा पथरचूर पाषाणभेद पनि भन्दछन् । सात हजार मीटरदेखि अग्लो पहाड़मा हुन्छ। यसको रस पिउने गरे सुकेको भए काढा पकाएर पिउने गरे पिशाबको नलीमा भएको ढुङ्गा (पथरी) पनि गलाएर निकाल्छ। मिश्री मिलाएर पिउनु पिशाबको सबै रोगमा लाभ गर्छ।

८. शुद्ध शिलाजीत मह मिलाएर खाने गरे शुक्रको कारण भएको मूत्रकृच्छ्र जाती गर्छ शिलाजीत एक अनाभरी र मह भातको एक चमच गर्नु।

९. अलैची, हिङ्ग र घिउ दूधमा मिलाएर खानाले मूत्र तथा मुटुलाई राम्रो गर्छ, वीर्यको दोषमा पनि लाभ गर्छ।

१०. गाईको महीसँग शुद्ध गन्धक एक आना भरी मिलाएर खाने गरे सबै प्रकारको मूत्रकृच्छ्रमा लाभ गर्छ।

११. खरेटीको जराको काढा बनाएर पिउने गरे सबै प्रकारको मूत्रकृच्छ्रमा लाभ गर्छ। । नोट—खरेटीलाई मदेसमा बरियार र पहाड़मा खरेटो भन्दछन् ।

१२. काँक्राको बियाँ, शिलाजीत, तिल पिधेर दूध अथवा घिउमा मिलाएर खानाले सबै प्रकारको मूत्रकृच्छ्रमा लाभ गर्छ।

१३. पाखनभेद, अलैची, शिलाजीत, पिपला मिलाएर चूर्ण बनाएर चामलको चौलानीमा फिटेर खानाले लाभ गर्छ।

१४. अम्लाको दानाको चूर्ण आधा तोला एक तोला गुड मिलाएर खानाले सबै प्रकारको मूत्रकृच्छ्रमा लाभ गर्छ।

१५. छोटी अलैंची अथवा बड़ा अलैची हिंग र घिउ मिलाएर पिउनाले वीर्य मिलेर जाने पिशाबको रोगमा लाभ गर्छ।

१६. तरबूजाको भित्रको एक पाबा जीरा तीन लाल भरी मिश्री आधा तोला मिलाएर खानु मूत्रकृच्छ्रको रामबाण औषधि हो।

१७. सेतो कमलको फूलको जरा आधा तोला जीराको चूर्ण तीन लाल भरी शकर आधातोला घिउ एक तोला बिहान बेलुकी खाने गरे सुजाक मूत्रकृच्छ्र रोगबाट छुटकारा पाउँछ ।

## मूत्रघात

१. जुन रोगमा पिशाब रोकिन्छ अथवा अलि अली मात्र आउँछ त्यो रोगलाई मूत्रघात भनिन्छ । मूत्रकृच्छ्रमा भन्दा मूत्रघातमा कम्ती तकलीफ हुन्छ। यो रोग प्रमेह रोगीलाई पनि हुन्छ।

२. बाल्ने कपूरलाई धागोमालटपटाएर बत्ती बनाउनु र मूत्रनलीको छिद्रभित्र लगाउनु। बन्द भएको पिशाब खुल्छ।

३. खाली कपूर मात्र भए पनि मूत्रनलीभित्र लगाउनु ।

४. मधुर शिखाको जरा जामलको चौंलेनीसङ पिधेर पिउनु र दूधसङ भात खानु मूत्रघात रोग जाती हुन्छ बन्द भएको पिशाब खुल्छ।

५. कचेडाको पात आधातोला कुटेर पानीमा फिटेर मिश्री मिलाएर पिउनु मूत्रको जलन शान्त हुन्छ।

६. गुड, दूध, घिउ मिलाएर पिशाब रोकिनेमा पिउनाले लाभ गर्छ।

७. मूलाको पातलो रस र कलमी सोडा चार आना भरी मिलाएर पिउनाले चाँडै पिशाब खुल्छ।

८. सोडा वाटर पिउनाले पिशाब सफा हुन्छ।

९. कोदोको जाँड पातलो पारेर अथवा तोङबामा लगाएर पिउनाले पिशाब रोकिने रोग जाती भएर पिशाब सफा हुन्छ।

## आस्मरी (पथरी)

१. वीर्य सुकेर मूत्र मार्गमा ढुंगा झैं बनिएकोलाई वीर्य पथरी भनिन्छ।

साथै कफको कारणले पनि पथरी बनिन्छ । यो रोगमा पिशाबको नलीमा त्यो ढुंगा आएर अड़कन्दा पिशाब रोकिन्छ र साह्रो दुख्छ। जब ढुङ्गा । हट्छ तब मात्र केही शान्ति पाउछ । बाख्राको पिशाब झै गन्ध आउँछ मूत्राशयमाा सहिनसक्ने दुख्छ यो पथरी बढ़दै जान्छ, डाक्टरहरूले चिरफार गरेर निकाल्छन् ।

२. यो रोगमा जंगली काँक्रको जरा कुटेर झोल झै रस खानाले ढुंगा आफै बिलिएर निक्लन्छ। जंगली काँक्रालाई हिन्दीमा अरण्ड कँकड़ी बंगलामा बोनो काँकुड़ भन्दछन् बंगालमा यो तितो हुनाले यो काँक्राको चटनी खान्छन् । यसको बदलामा घरको काँक्राको जरा खान हुँदैन ।
३. कचेडाको पातको रसमा मह मिलाएर खाने गरे रोग जाती हुन्छ।
४. अमलाको नरम नरम पातको रस तिलको तेल मिलाएर खाने गरे भयानक पथरी जाती गर्छ।
५. जवाखार, सुहागा, कल्मीसोडा बराबर मिलाएर पिंधनु र छानेर एक एक आना भरी पानीसङ दिनमा तीन चार पल्ट खाने गरे ढुङ्गा गलेर निक्लन्छ।
६. दुइ आना भरी जवाखार, दुइ आनाभरी काँचो सुहागा पिंधेर दुइ आना भरी गोखरूको रसमा मिलाएर खानाले पथरी आफैं बिलाउँछ ।
७. नीमको पातको खार दुइ आना भरी बासी पानीसंग बिहानै उठ्ने साथै खाने गरे एघार दिनमा पथरी आफै बिलिएर निकलन्छ ।
८. अंगूरको लहराको खार दुई आना भरी गोखरूको रसमा खाने गरे पथरी आफै टुक्रीएर निक्लन्छ।
९. घरको काँक्राको बियाँ पिंधेर मिश्रीसंग फिटेर खाने गरे लाभ गर्छ।
१०. चौराईको साग खाने गरे यो रोगमा लाभ गर्छ।

११. पाखनभेद मूत्र कृच्छ्मा भने झै गरी खानाले लाभ गर्छ।

## मेद रोग

१. मेद रोग यो रोगमा फोक्सेमासु लाग्छ, बेकारको शरीर बढछ, बेकारको शरीर भारी हुन्छ ताकत हुँदैन ।

२. यो रोगमा आधापावा गाईको गौतमा मह एक चम्मच मिलाएर खाने गरे शरीर खदिलो र तन्दुरुस्त हुन्छ।

## शरीरको दुर्गन्ध

१. यो रोगमा पसीना गनाउँछ अथवा शरीरबाट नराम्रो गन्ध आउँछ हर्दी (बेसार) दूधमा पिंधेर शरीरमा लगाउने गरे शरीरको नराम्रो गन्ध हराउँछ ।

२. हडडको चूर्ण रक्सी अथवा महसंग मिलाएर चाटने गरे पसीना धेरै आउनेमा लाभ गर्छ।

३. पानीमा चूना मिलाएर काखीमा लगाउने गरे काखीको गन्ध हराउँछ।

४. घरेलू औषधि पहिलो भागमा फिटकेरीको गुण पढ्नु होला ।

## चिसो पसीना आउने

१. मूङ (मूँग) लाई डढाएर पिंधनु र हाँत खुट्टा पैतालामा घसनु यसो गरे पसीना आउन कमी हुन्छ।

२. गहत र पहेंलो कौडी डड़ाउनु अलग अलग पिंधेर फेरि दुवैलाई एकै ठाउँमा मिलाउनु र हात खुट्टामा घस्ने गर्नु चिसो पसीना बन्द हुन्छ ।

३. फिटकेरी पानीमा फिटेर घस्नु पसीना बन्द हुन्छ। यसको गुण

पहिलो भागमा पढ्नु होस।

## दुब्लो हुने

१. दुब्लो मानिसको शरीर पातलो र लुते हुन्छ यस्तो मानिसले दूध र रोटी खाने गर्नु। रोटी गहुँको राम्रो हुन्छ।

## भुँड़ीको रोग

१. सबै प्रकारको भुँडीको रोग प्राय मन्दाग्नि (पाचन शक्ति कमजोर) अथवा अजीर्ण बेसी खानाले हुन्छ। भुँडीको रोगदेखि बाँच्नको लागि अगस्ती खान हुँदैन टट्टी कब्जी हुन नदिनु । यो रोगमा यान गरे बात, पित्त कफ बिग्रेर रोग हुन्छ।

२. बातको कारणले रोग भए हात खुट्टा सुनिने, नाभी कोखा सुनिने, करङ्ग भित्र कोखा भुँडी, कम्मर ढाड दुख्ने, सूखा खोकी लाग्ने, नाभी मुनिको अङ्ग गह्रौं हुने, टट्टी नलाग्ने आदि उपद्रव हुन्छ । उपचारः—एक पावा गाईको मूतमा अरण्डीको तेल मिलाएर पिउनु । अरण्डीलाइ कस्टर आयल पनि भन्दछन् ।

३. गाईको (मोहि) महीमा पिपलाको चूर्ण मिलाएर अलिकता अलिकता सिधा, नून लगाएर पिउनु।

४. त्रिफलाको काढामा गाईको मूत लगाएर पिउनु।

५. वातोदरमा पुरानो घिउ घसेर सेक्नु ।

६. पित्तोदरमा जरो आउनु, मुर्छा हुनू, तिर्खा लाग्नू, मुखमा तितो लाग्नू पखाला लाग्नू आदि हुन्छ। यो रोगमा गाईको अमिलो नभएको मोहिमा चीनी र गोलमरीच मिलाएर पिउनु।

७. कफोदर यो रोगमा शरीर सुस्त, सुनिनू, स्पर्श ज्ञानमा कमी, निद्रा धेरै लाग्नू, छाद्न मन हुनू, अरूची, खोकी, आँखा, छाला

आदिको रंग सेतो हुनू भुँडी भिजेको जस्तो लाग्नु इत्यादि हुन्छ। यो रोगमा गहत पकाएर सुठो (सुकेको अदुवा) गोल मरीच, पिपलाको चूर्ण मिलाएर खानू।

८. शुद्ध शिलाजीत गाईको मूतमा लगाएर खानू यसले सबै प्रकारको उदर (भुडी) को रोगमा लाभ गर्छ।

९. फियोको कारण यो रोग भए पिपलाको चूर्ण दूधमा लगाएर खानू।

१०. पाकेको आँपको रसमा मह मिलाएर खानू।

११. शोथोदर (सुनिएमा) नौनी घिउ अदुवाको रस मिलाएर पकाउनू घिउ मात्र रहेपछि यो घिउ पिउनाले सुनिए को भुडीको रोगमा लाभ गर्छ।

१२. घिउकुमारीको रसमा हर्दी (बेसार) मिलाएर खानू। घिउकुमारीलाई (ग्वारपाठा) भन्दछन्।

१३. ऊट अथवा बाख्राको मूत पिउनाले सोथोदरमा लाभ गर्छ ।

१४. सात दिनसम्म भैंसीको मूत दूधमा मिलाएर खानू अन्न तथा अरू केही नखानू, सुनिएको जाती हुन्छ।

नोट—कुनै पनि अंग सुनिएकोमा नून खान हुँदैन ।

## सुनिएको रोग

१. बातको रोग सुनिएको एकै ठाउ रहदैन, यता उता हुन्छ। छाला पातलो भए झै हुन्छ। छालाको रंग कालो अथवा रातो वर्ण हुन्छ। छुँदा स्पर्शज्ञान कमी हुन्छ, झमझमाउँछ, कहिले आफै घट्छ कहिले आफै बढछ, दिउँसो रोग केहि बढछ राती केही घटछ।

२. बातको कारण सुनिएकोमा टट्टी कब्जी छ भने रेड़ीको तेलमा दूध मिलाएर खानू। जुलाफ हुन्छ, रोग घटछ। लाभ गर्छ।

३. दशमूलको काँढा पकाएर खाए रोगबाट मुक्त हुन्छ।

४. एक तोला त्रिफलाको चूर्ण गाईको मूतमा फिटेर पिउनु ।
५. बातको कारण सुनिएकोमा तेल मालिश गरी पसिना निकाल्नु।
६. कफको कारणले सुनिएकोमा एकै प्रकारले रहने, ढिलो जाती हुने, थिच्दा बस्ने छोड्दा बिस्तारै उठने हुन्छ। मुखबाट पानी आउँछ, निद्रा बेसी लाग्छ खानमा अरूची हुन्छ। उपचार माथि ४ नं० मा दिएको औषधिले बात, पित्त, कफ सबैमा लाभ गर्छ।
७. हडडको चूर्ण गाईको मूतसंग खानु।
८. चिराइतो (चिरेटो) सूठो पानीमा पिधेर तातो पानीसंग खानू लुगामा छान्नु र पिउनु ।
९. अदुवाको रस पिउनु पचे पछि दूध भात खानु ।
१०. सिलाजीत त्रीफलाको काढ़ामा मिलाएर खानु ।
११. बेलको पात कुटेर रस निकाली लुगामा निचोरेर दुई तोला दिनहुँ खानाले रोग जाती हुन्छ।
१२. भैंसीको नौनी घिउ लगाउनाले भलायोले सुनिएको जाती गर्छ। भैंसीको गोबरको रस घस्नाले पनि जाती गर्छ हाम्रो पहाडमा भलायो उछिए मित लगाउने पनि चलन छ।
१३. सिउड़ीको पातको रस मालिश गर्नाले सुनिएको घट्छ।
१४. परेवाको मासु तेलमा पकाएर खानाले लाभ हुन्छ।
१५. रातो पुनर्नवाको रस एक तोला दिनहुँ पिउनाले सुनिएको घट्छ। रातो पुनर्नवालाई कतिले आँख्ले घाँस पनि भन्दछन् ।
१६. सुनिएको रोगमा नून र पानी पिउन बन्द गर्नु उचित छ।
१७. धनिया मानिसको पिशाचमा पिंधेर लगाउनाले सुनिएको घट्छ।
१८. वरको पात घिउमा चोपेर तताए र तातो–तातो बाँधनु सुनिएको घट्छ।

१९. इसबगोल पिंधेर लगाउनाले अण्डकोष सुनिएकोमा लाभ गर्दछ।
२०. बोझो र तोरी लगाउनाले अण्ड कोष सुनिएको हराउँछ ।
२१. जीरा (जीरो) र गोलमरीच पिंधेर लगाउनाले अण्डकोष सुनिएको जाती गर्दछ। यदि अण्डकोष चिलाउँछ भने शिरीसको बोक्रा कुटेर घसनु ।

## गलफुला

१. यो रोग बंगारा मुनी चिउँडोको माथि हुन्छ। यो रोगलाई नेपालीहरूले गल्फुला हिन्दीमा गलगण्ड भन्छन् । यसमा पांग्रा चूकमा घोटेर लगाउछन् । कसैले मोसो, कसैले प्लस्टर लगाउँछन् दुङ्गामा हुने मानेको जरा घोटेर लगाउनु, जलकुम्भीको जरा सींधानून पिपला, मिलाएर पिंधेर लगाउनु। कायाफल घोटेर लगाउनु, रातो एरण्डको जरा चामलको चौलेनीमा घोटेर लगाउनु।
२. यो रोगमा तोरी, नीमको पात, भलायो डढाएर खरानी बाख्राको दूधसङ कुनै पनि लगाउँछन् लाभ हुन्छ।
३. सेतो अपराजिता फूलको जरा गाईको मूतमा पिंधेर लगाउनु ।
४. एक आना भरी पिपला आधा तोला महमा मिलाएर खानु।
५. दुई तोला जंगली कपासको जरा चामलको चौलानीमा पिंधनु र रोटी बनाएर खानाले लाभ गर्दछ।

## आगोले पोलेको

१. आगो, पानी, तेल इत्यादिले डढेको अथवा पिल्सिएको अथवा चूल्हामा काम गर्दा आगोले पोलेको सरल उपचार।
२. यदि पोलेको ठाउँमा पानी फोका भए फोका फुटाउनु हूँदैन। यौटा

सियोमा धागो लगाएर मासु नघोचने गरी फोकामा सियो वार पार छिराएर धागो उन्नु । दुवैपट्टिबाट एक एक सूत राखेर काटिदिनु धागो फोकाको बीचमा रहे चालै नपाई बिस्तार बिस्तार सुकेर त्यो फोकानै मासुमा मिलेर घाउ हुन्छ। धागो कैची छुरा चीजले फोकाको छाला नतानिने गरेर काट्नु पर्दछ।

३. चुल्हामा काम गर्दा थोरै पोलेको भए आलू कुटेर लगाइदिनु अथवा पिंधेर लगाए पनि हुन्छ जलन र पोलेको जाती हुन्छ ।

४. सुकेको सिउडी डढाएर तेसको खरानी पिल्सिएकोमा लगाउनु अथवा पानीमा फिटेर लिटो जस्तो बनाएर प्वाँखले लिप्नु, पाउडर झै खरानी लगाउनु परे रूमालमा फुस फुस पाउडर झै लाउनु ।

५. आँखामा सिउड़ीको दूध परे आँखाभित्र गाईको नौनी घिउ लगाउनु।

६. पुरानो सुकेको चूना 'पावर' गएको पिंधेर पाउडर झै छर्नु अथवा पोलेको फटकेरी (फिटकेरी) को धूलो लगाए तेलले डढेको जाती हुन्छ।

७. पोलेको ठाँउमा मह लगाउनु तुरुन्तै जलन शान्त हुन्छ। मह माउरीको असल हुनु पर्दछ। औषधिमा जर्ता ठाउँ मह लेखिएको छ, माउरीको प्रयोग गर्नु।

८. एक तोला सोडा दुई तोला पानीमा फिटेर लगाए पोल्नासाथ लगाए फोका उठन पाउदैन । सोडा नपाए नरिवलको तेल प्रयोग गर्नु। अग्रेजी औषधि ग्लिसीरीन लगाए पनि हुन्छ।

९. यौटा लुगा तार पीनको तेलमा भिजाएर लगाउनु पहिला लगाउनु साथै केही तकलीफ बढछ तर पछि केही क्षणमा तुरून्तै लाभ गर्छ।

१०. गड़ेउला मट्टीतेलमा पकाएर लगाए जलन र दुख्नु तुरून्तै लाभ गर्छ। मट्टीतेलमा गड़ेउला पकाउदा खाने तेल खराए झै गर्न हुँदैन ।

११. यदि धेरै नै जलेर पिल्सिएको भए सहन सक्ने तातो पानीले धुनु। रोगीले सहन सके दुखाईमा तुरून्तै लाभ गर्छ । तर पोलेको घाउमा चिसो पानी लगाउन हुँदैन।

१२. नानीहरूलाई पोलेर फोका उठेको छ भने न० १ मा लेखेझै सियोले धागो फोकामा लगाउनु र कैचीले दुवैपट्टि धागो काटनू। अथवा फोका नपिल्साई पानी निकाली दिनू। एक तोला खयर, आधा तोला वाल्नेकपूर, चार आना भरी सिन्दूर मिहीन पिंधेर लगाई दिनू । यो उत्तम उपाय हो।

१३. बरको डुकु गाईको दहीमा लगाउनू ।

१४. अण्डा (कुखुराको फूल) को सेतो भाग तेलमा फिटेर लगाउनू ।

१५. भुँई कटहरको पात पिंधेर लगाउनू ।

१६. जौ अथवा गहुँको पिठो छर्नू ।

१७. हिङ्ग पानीमा घोटेर लगाउनू, पानीमन तातो हुनूपर्छ।

१८. मेहन्दीको पात पिंधेर लगाउनू।

१९. साह्रै ठूलो पिल्सिएको भए बाख्राको बड़कुला ल्याएर तावामा लगाएर सुकाउनु, आगाको छेउमा राखेर सुकाए पनि हुन्छ, राम्रो सुकेपछि पिंधेर पाउडर झै बनाउनु र एउटा पातलो रूमालमा लगाएर माथिबाट फुस् फुस् पाउडरझै धुलो झारी दिनु। यस प्रकारले जतिनै पिल्सिएको भएपनि तुरून्तै पाप्रा बस्छ र घाउ जातीहुन्छ । पाप्रा बसेपछि उक्काउनु हुँदैन आफै जाती भएर उक्कन्छ साथै पाक्ने चीज खानु हुँदैन। घाउ पाक्न नदिने चिज खानु यो एकदमै असल उपाय हो।

२०. पोल्नासाथ घिउकुमारीको रस लगाउनु, जलन शान्त हुन्छ। घिउ कुमारीलाई हिन्दीमा ग्वारपाठा भन्दछन्।

## अन्य घाउहरूमा

१. घाउमा पीप आई बस्छ भने नीमको पात महसँग मसिनो पिधेर मलमझै बनाएर लगाउनु ।

२. घाउमा सिमेझार सम्झेर यसलाई मुसापुछरे पनि कतिले भन्दछन्। यो झार पानीमा माडेर त्यो पानीले घाउ धुनु, यदि घाउ पुरानोछ भने लुगा पट्याएर बाक्लो भिजाएर घाउमा बाँधनु र घरी–घरी लुगा सुक्न नदिई भिजाई बस्नु बेलुकी खोलेर घाउ त्यही पानीले धुनु र फेरि तेसरी नै लुगा बाँधि राख्नु, राती पनि भिजाउदै गर्नु सुक्न नदिनु, बिहान फेरि तेसरी नै घाउ धुएर फेरि बाँधेर भिजाउदै गर्नु। ३,४, पल्ट धुएपछि तेही झार माडेर रस लगाई दिए घाउ जाति हुन्छ । यदि झार नचिने सादा पानीमा डिटोल लगाएर भए पनि सादा उमालेर चिसो पारेको पानी भए पनि यही उपाय गर्नु। घाउमा पीपको सेतो सेतो जबसम्म सफा हुँदैन यही उपाय गरे घाउ छिटो निको हुन्छ । यो झारलाई हिन्दीमा बारतङ भन्दछन् ।

३. घाउ साह्रै दुख्छ भने पियाज चिरेर रस लगाउनु अथवा पियाज चिरेर बाँधनु।

४. नीमको पात तिल र मह पिंधेर लगाए घाउ जाती हुन्छ।

५. बेलको रूखको दाउरा अथवा फल आदि पानीमा घोटेर लगाउनु।

६. स्त्रीजातिको रितु (ऋतु) कालको खून (रगत) ले भिजेको लुगा डढ़ाएर त्यो खरानी लगाउनाले घाउ चाँड़ो जाती हुन्छ।

७. गधाको मासु छाला समेत डढाएर लगाए घाउ चाड़ो जाती हुन्छ।

८. पोलेको फटकेरी पाउड़र बनाएर घाउमा लगाउने गरे घाउ सफा हुन्छ।

९. हर्दी घाउमा लगाउनाले घाउ चाँडो जाती हुन्छ।

१०. पुरानो घाउमा मान्छेको खोपड़ी घोटेर लगाउनु ।

११. घाउ पोले अथवा सुनिए हाम्रो पहाडमा सिमे लागेको भन्दछन् त्यस घाउमा न० २ मा लेखेको झार माडेर लगाउनु तुरून्तै लाभ गर्छ। यो झार चिसो ठाउँमा हुनाले सिमे, मुसाको पुच्छर झै बीचबाट फल लाग्ने हुनाले मूसापुच्छरे, पात चुड़ाउँदा नसाझै निक्लने हुनाले नसे भन्दछन् ।

## हड्डी भाँचिएको

१. हड्डी भाँचिएकोमा हाडजाडे (हडचूर) उत्तम औषधि हो। काचो सिम्रीक मह, अण्डा, दूध मिलाएर खाए हड्डी चाँडो जोडिन्छ। साथै बलियो पनि हुन्छ। जहाँ भाँचिएको छ काँचो सिम्रीक त्यही ठाउँमा पुग्छ तर सिम्रीक पाउडर झै पिंधेको हुनुपर्छ। यसो हुँदा मासुभित्र गएर भाँचिएको ठाउँमा पुग्छ।

२. यस बाहेक हाम्रो पहाड बासीले धेरै जंगली औषविहरू भाँचिएकोमा उपचार गर्छन् काँम्रो बाँधनेमा जड़ीबूटी जस्तै पैचु पकाएर बन सुन्तला आदि अनेक औषधि गर्छन् यस कारण डाक्टरकोमा हड्डी बढाउने क्यात्सीयम सिवाय अरु हुँदैन। हडचूरमा क्याल्सीयम पनि पूरा मात्रामा हुन्छ।

३. बाहसिंगे पनि घोटेर खानाले भित्री चोट जाती गर्छ।

४. फटकेरी एक आना भरी चार तोला घिउमा पकाउनु जब फटकेरी सुनि बस्छ त्यो घिउउतार्नु र त्यो घिउमा शकर र मैदा मिलाएर पकाएर खाने गर्नु चोट जाती हुन्छ। फटकेरी निधारको चोटमा त्यो हलुवा अलिकतामा मिलाएर तातो तातै बाँधनु यसरी तीन दिन गर्नाले पूर्ण लाभ गर्छ।

५. काँचो सिम्रीक एक भाग फटकेरी दुई भाग कुटेर पाउडर बनाएर

तावामा पकाउनु पानी लगाई फटकेरी उम्लन थाल्छ। मुनि केही जमेपछि पल्टाएर दुवैपट्टि सुकेर मकैको फुल झै सुखा भएपछि पाउडर बनाएर राख्नु र एक आना भरीको खुराक बनाएर खाने गरे भित्री चोटको रामबाण औषधि हुन्छ। मह मिलाए झन औषधि उत्तम हुन्छ।

## भगन्दर

१. यो रोग मलद्वारको एक डेढ़ इञ्च भित्र हुन्छ। मलद्वारको छेउमा कुनै पनि खटिरा निस्कियो भने झट्टै औषधि नगरे भगन्दर हुन्छ यो रोग बडेर टट्टी पिशाब पनि यो भगन्दरको छिद्रबाट आउन सक्छ। यो रोग मा बिरालोको हड्डी घोटेर लगाउने गर्नु। नभए चाड़ो नै डाक्टर कहाँ गई ओप्रेशन गर्नु। बबासीरको फोका मुखमा हुन्छ, भगन्दर केही फरकमा घाउ हुन्छ।

## काटेकोमा खून बन्द गर्नू

१. मसिनो पिधेको हर्दी घाउमा लगाउनाले खून बन्द हुन्छ।
२. घोडाको लिदी बाँधनाले खून बन्द हुन्छ।
३. माजु (माझी) फल पिंधेर लगाउनाले खून बन्द हुन्छ।
४. फटकेरीको धुलो लगाउनाले खून बन्द हुन्छ।
५. ठूलो घावमा कुनै उपायले खून बन्द नभए कुनै पन्छी परेवा कुखुरा बाख्रा कुनै चीजको खून घाउमा चुवाउनाले तत्काल खून बन्द हुन्छ।
६. माकुराको जालो जम्मा गरेर घाउमा लगाएर बाँधनाले खून बन्द हुन्छ साथै घाउ चाँडो जाती हुन्छ।

## कोढ, दाद (चर्मरोग)

१. सिम्म यो विशेष छातीमा हुन्छ रगडदा धुलोझै आउँछ अरू ठाउँ कम्ती हुन्छ। मूलाको बिउ र अपामार्ग झार दहीमा पिंधेर लगाउनु।
२. दाद, दादलाई खोश्रेर दिनमा दुई पल्ट कागती (नीबू) को रस लगाउनु, दादमा सरेस मलनु। नीमको पात दहीमा पिंधेर लगाउनु।
३. चिलाउने रोगमा कल्मी सोडा तेलमा फिटेर घसनु । कपूर तेलमा मिलाएर लगाउनु (बाल्ने कपूर) ।
४. बोझोलाई पानीमा घोटेर लगाउनु सबैप्रकारको छालाको रेगमा लाभ गर्दछ।
५. आँपको गेड़ाको गुदी सेधानून मिलाएर तामाको भाँडा दियो आदिमा घोटेर लगाउनु चर्म (छाला) को रोगमा लाभगर्छ।
६. भाङको पात, मिश्री, घिउ, मिलाएर खानाले सबै प्रकारको चर्म रोगमा लाभ गर्छ।
७. नीमको पात शरीरमा रगड़ेर मल्नाले कोढ चर्म रोगमा लाभ गर्छ।
८. केतकी फूलको पात मलनाले चिलाउने रोग जाती हुन्छ।
९. तुतिया (निलोतुथो, निलातुथा) पाउडर बनाएर एक लालभरी र माजु फल चार आना भरी मैन डेढ तोला, मह डेढ तोला,, एकै ठाउँ पिंधनू मलम बनाएर लगाउने गरे दादको रामबाण औषधि हुन्छ।

## शीत पित्त (जावे उछ्रिनु)

१. नेपालीमा जावे भनिन्छ । हिन्दीमा पित्त उछल्ना भन्दछन् । यो रोगमा छदाए, छेराए, खाने तेल शरीरमा घसे आराम हुन्छ । यो अनुभव सिद्ध असल उपाय हो।

२. हाम्रो नेपालीमा खस्रो लुगा दलेर राडी आदि खस्रो लुगा ओढने चलन छ। कसैले रातो माटो (गेरू) घस्छन् वा दल्छन् ।

३. त्रिफला मह मिलाएर खानाले जाती हुन्छ।

४. पुरानो गुड र अदुवाको रस मिलाएर खानु।

५. दुवो झार र हर्दी मिलाएर पिंधेर घसनु ।

६. नीमको पात अमला घिउमा एकै ठाउँ मिलाएर पिंधनु र खाने गरे चिलाउने रोगहरू जाती गर्छ। घाउमा सिधानून यसमा मिलाएर लगाए जाती हुन्छ।

## टाउकोको रोग

१. टाउको दुखेर जरो आउँदा, टट्टी कब्जी हुँदा, रूघा लाग्दा, खोकी लाग्दा उपदंश रोगमा, स्नायविक दुर्बलता, आँखा कमजोरीले, टाउको सम्बन्धी रोग, कलेजोको दोष, गर्भाशय आदि दोष, प्राकृतिक नियम भंग आदि भयो भने मात्र हुन्छ।

२. सूर्य्यबार्ता यो रोग विहान घाम झुल्कदा दुख्न शुरू हुन्छ, जती जती घाम चढदै जान्छ उति उति सारो दुख्ने बढछ, जब घाम ढल्कन थाल्छ दुख्ने कम्ती हुँदै जान्छ जब घाम अस्ताउँछ दुख्न जाति हुन्छ। यसरी नै दिनहुँ घाम झुल्कन थालेपछि दुख्न थाल्छ घाम अस्ताउँदा जाती हुन्छ। भाँगको रस बाख्रा को दूधमा भाड़ामा मिलाएर घाममा राख्नु, घामले तातेपछि हल्लाएर नस झै भित्रसम्म पुग्ने गरेर सुङ्नु। गुड़ र घिउ मिलाएर आगोमा तताएर खानु। अथवा दूध र घिउ मिलाएर तताएर खानु। घिउमा मालपुवा पकाएर खानु घिउ पुरा लगाउनु। सुत्ने बेलामा एक गिलास चिसो दूध पिएर सुत्नु, दूध गाईको हुनुपर्छ।

३. टाउको दुखेमा नस सुङ्नु, बिहान बिहान गाईको दूध नाकबाट पिउनु।
४. टट्टी बन्छ भएर दुखेमा जुलाप खानु टट्टी हुने औषधि खानु।
५. जरोले दु:खेमा जराको औषधि खानु।
६. रूघाले टाउको दु:खेमा रूघाको उपचार गर्नु, नस सुँगनु, पेपरमेण्ट (पानमा खाने) र बाल्ने कपूर मिलाएर सुङ्नु, कन्पट्टीमा घसनु। रूघा पुरानो भएर टाउको दु:खे नौसादर र पानमा खाने चूना मिलाएर घरी घरी सुङ्नु।
७. स्नाविक दुर्बलताले टाउको दुखेमा शरीर पुष्ट हुने भोजन खानु।
८. हिस्ट्रीयाले टाउको दु:खे मानसिक उपचार गर्नु।
९. स्त्रीको गर्भाशयको कारणले दुखे तातो पानीमा डुबेर बस्नु।
१०. अल्छीले टाउको दु:खे मेहनत गर्नु, काम नभए हिंडनु।
११. चिसोको कारणले टाउको दु:खे सुठो, दालचीनी घोटेर चल्नी पुरपुरामा घसनु दुबै मिलाएर लाए पनि हुन्छ। पेपरमेण्ट कपूरमा मिलाएर घसे पनि हुन्छ।
१२. पित्तको कारणले दु:खे टाउकोमा घरी घरी चिसो पानी लगाउनु चन्दन, गुलाबको फूल, धनियाँ एकै ठाउ पिंधेर लगाउनु।
१३. दूध र घिउ मिलाएर नाकभित्र पुग्ने गरी सुगनु।
१४. कफको कारणले दुखे काफलको नस अथवा कड़ा नस सुङ्नु।
१५. सुँठोको धुलो दूधमा मिलाएर नाकभित्रसम्म पुग्ने गरी सुङ्नाले धेरै प्रकारको टाउको दुख्ने रोग जाती हुन्छ।
१६. सेंधानून र पिपला नस बनाएर सुंगनु त्रिदोष टाउको दुख्ने पनि जाती गर्छ।
१७. घिउ दशमूलको काढामा नून लगाएर खाए आधा टाउको दुख्नु जाती हुन्छ।

१८. घिउमा सिंधानून मिलाएर खानाले आधा कपाल दुख्ने जाती गर्छ।
१९. सीपको चूर्ण र नौसादर (सुन उज्याल्ने) नस बनाएर सुङ्नु।
२०. दालचीनीको तेल घसनाले अथवा दालचीनी घोटेर लगाउनाले बातको टाउको दुख्ने जाती गर्छ।
२१. केशरलाई घिउमा भुटेर मिश्री मिलाएर नस सुँगनाले हर प्रकारको टाउको दुख्ने जाती गर्छ।
२२. कपूर र चन्दन घोटेर नाकभित्रसम्म पुग्ने गरेर लगाउनाले पित्तको कारण टाउको दुखेको जाती गर्छ।
२३. रातो चन्दन घस्नाले टाउको दुख्ने जाती गर्छ (पानीमा घोटेर)
२४. कुखुराको फूल (अण्डा) को सेतों भाग र धनिया पिंधेर लगाउनाले गर्मीको कारणले टाउको दुखेको जाती गर्छ।
२५. सर्दीले टाउको दुखेको पिपला, गोलमरीच, ल्वाङ कुनै पनि चिज नहुन सके सबै मिलाएर नस बनाएर सुङ्नु।
२६. ढुकुरको सूली रायोको बिउ मिलाएर पिंधेर लगाउनाले पुरानो टाउको दुखने रोगमा लाभ गर्छ।
२७. कुखुराको सूली गोलमरीच बराबर मिलाएर पिंधनु र दाहिने पट्टी दुखने देब्रेपट्टि र देब्रेपट्टि दुख्यो भने दाहिने पट्टि लगाउने।
२८. रिट्ठाको फींज निकालेर गरम गरी नाकभित्र पुग्नेगरी चुनावउनाले आधा कपाल दुख्न जाती गर्छ ।
२९. छोहडाको गेडा पानीमा घोटेर लगाउनु टाउको दुःख्नेमा लाभ गर्छ।
३०. सुठोलाई दूधमा पकाएर नाकभित्रसम्म पुग्ने गरी लगाउनु सबै प्रकारको टाउको दुखाई जाती गर्छ।
३१. नीम र अमलाको बोक्राको काढा पिउनू।
३२. कपूर न धनिया पिंधेर नसझै सुग्नू।

३३. चन्दन कपूर घोटेर घस्नू।

३४. रातो घिउकुमारी (लाल ग्वारपाठा) को रसमा स्प्रीट मिलाएर केसमा लगाउने गरे केश सेतो फुल्दै गरेको कालो हुन्छ।

## आँखाको रोग

१. त्रिफलाको काँढा बनाएर सफा छानेर आँखामा लगाउने गरे हरेक प्रकार को आँखाको रोग लाभ गर्छ।

२. स्त्रीजातिको दूध आँखामा लगाउनाले आँखाको रोगमा लाभ गर्छ।

३. नीमको पात पिंधेर आँखा बाहिरबाट पट्टी बाँधनाले पित्त र कफको कारणले दुखेकोमा लाभ गर्छ।

४. नीबूको रस फलामको भाड़ामा फलामले नै घोटेर कालो भए पछि आँखामा वरीपरी लगाउनाले आँखा दुख्न जाती हुन्छ।

५. गोबरको रसमा पिपला घोटेर सुर्मा लगाउनाले रतौंधी निको हुन्छ। रतौंधी भएकोले राती एकदमै देख्दैन।

६. भैंसीको दूधमा रूवा भिजाएर आँखामा लगाउनाले गर्मीले दुःखेको रातो भएको, सुनियोंको जाती हुन्छ।

७. बरको पात घिउमा चोबेर आँखामा बाँधनाले आँखा दुख्न जाती गर्छ।

८. गधाको रगत दुई चार दिन आँखामा लगाउने गरे रतौंधी जाती गर्छ।

९. मानिसको कानेगुजी घोटेर सुर्मा लगाउनाले रतौंधिमा लाभ गर्छ। (यो १०—१५ दिन) लगाउनु पर्छ।

१०. करेला (तिते) को पातको रस गोलमरीच घोटेर सुर्मा बनाउनु र लगाउने गरे रतौंधि दस पन्द्रह दिनमा जाती हुन्छ।

११. रिट्ठा पानीमा घोटेर लगाउनाले पनि रतौंधी जाती गर्छ।

१२. मर्द (मानिस) को कानेगुजी मममा घोटेर लगाउने गरे रतौंधी

जाती गर्छ।

१३. नौसादर घोटेर सुर्मा लगाउने गरे मोतियाबिन्द (आँखामा सेतो सेतो दाग हुने) जाती गर्छ।

१४. छोराको आमाको दूधमा भीनसेनी कपूर घोटेर लगाउने गरे मोतियाबिन्द जाती गर्छ।

१५. नीमको बिउ (गेड़ा) घोटेर सुर्मा लगाउनाले आँखाबाट पानी बगनुमा लाभ गर्छ।

१६. मान्छेको कानेगुजी र हिंग बराबर मिलाएर घोटेर मह मिलाएर सुर्मा बनाई (झैं) लगाउनाले मोतियाबिन्द जाती गर्छ।

१७. मान्छेको केस डड़ाएर खरानी बनाउनु र त्यो खरानी सुर्मा झैं लगाउनाले आँखाको पलकको रोग जाती गर्छ। अथवा दुखुराको फूलको खोस्टाको खरानी भए पनि हुन्छ।

१८. सुतेर बिहान उठने बित्तिकै आफ्नो थूक आँखामा लगाउने गरे आँखामा कुनै रोग लाग्न पाउदैन।

१९. रामबाण औषधि घरेलू औषधि पहिलो भागमा हेर्नु होला।

२०. पियाजको रस निकालेर मह मिलाएर लगाउने गरे आँखाको रोशनी बढछ राम्रो न देख्नेहरूले देख्न थाल्छन् यसले नयाँ हुदै गरेको मोतियाविन्द पनि काट्छ। दिनहुं ताजा बनाउदै दुई दुई थोपा लगाउने गर्नू। कम्ती देख्नेले १५—२० दिनमा राम्रो देख्न थाल्छ।

२०. नून र चीनी जिब्रोमा लगाउनु जिब्रो खस्रो हुन्छ र फूला परेको चाटे ओप्रेशन गरे झै फूला निक्लन्छ। फूला चाटेर कुल्ला गर्नू।

२१. परेवाको सूली अथवा कुखुराको सूली र कागती (नीबू) को रसमा घोटनु र ताँबाको बटुका दियो अथवा कुनै ताँबाको पात्रमा राखेर छोप्नु यसलाई आँखामा दिनहुं लगाउने गरे फुलाको जाला काटिन्छ।

२२. बारह सिंगेको सिंङ घोटेर लगाउने गरे आँखाको फुला जान्छ।
२३. बरको रूखको दूध आँखामा लगाउनाले फुलाको जाला काटिन्छ।
२४. नौसादर फटकेरी बराबर मिलाएर बनाउनु र लुगामा छान्नु र सुर्मा झै आँखामा लगाउनु, (सिधा भित्र लगाउनु हुँदैन) जाला हराउछ। सिधा पिठा झै लगाए आँखा बिगार्छ।
२५. घोड़ाको माथि पट्टीको दाँत पानीमा घोटेर लगाउनाले आँखाबाट पानी बग्न बन्द हुन्छ।
२६. सेतो पुनर्नवाको जरा दूधमा घोटेर लगाउनाले फुला जान्छ। खाने तोरीको तेलमा घोटेर लगाउनाले आँखा तिर्मीराउनु र घुर्माइमो देख्नु जाती हुन्छ। काँजीमा घोटेर लगाउनाले रतौंधी जाती गर्छ।
२७. पुरानो घिउ आँखामा लगाउने गरे आँखामा रोग लाग्दैन।
२८. बाल्ने कपूरलाई महमा घोटेर लेप लगाउनेगरे सबै प्रकारको आँखाको रोग जाती गर्छ।
२९. एक लाल गेड़ी भरी फटकेरी दुई तोला पानीमा फिटेर सफा बोतलमा राख्नु, बेलुकी पहिला हातमा खाने तेल लगाएर खुबै सेक्नु त्यसपछि दुई दुई थोपा आँखामा टपकाउनु, बिहान नसेकी लगाए पनि हुन्छ। आँखा रातो भएको आँखामा बिहान कचेरा आएर रातो हुने रोग सरूवा रोग इत्यादिको रामबाण औषधि हो, आँखाको सरूवा रोग गाउँमा आए सफा पानीमा यो औषधि बनाएर बाटने गरे डाक्टरको औषधि किन्नु पर्दैन।
३०. कपूर र बरको दूध घोटेर लगाउनाले फुला काटीन्छ।
३१. यौटा कालो सांप, चार वटा बिच्छू, (बिच्छी) यौटा हाँड़ीमा लगाएर गाईको दूध भर्नु र ढकना बन्द गरेर २१ दिन जमीनमा गाडेर राखनु तेस पछि हाडी निकालेर मरेको बिच्छी र साँप फ्याँकी दिनु 'त्यो दहीको मोहि पारेर घिउ निकाल्नु, त्यो घिउ

कुखुरालाई खुवाउनु र तेस्रो दिन कुखुराले हगेको सूली जम्मा गरेर सुर्मा बनार आँखामा लगाउने गरे अन्धा भएको रोगीले पनि आँखा देख्छ तर जनमको अन्धालाई होईन भनी चिकित्सा चन्द्रोदयको भनाई छ। पाठकले परीक्षा गर्नू होला।

## कानको रोग

१. कान पाकेकोमा घरेलू औषधि पहिलो भागमा लेखेझै पोलेको फटकेरी पाउडर बनाएर कागतको खोचिमा लगाएर भित्रसम्म पुग्ने गरी फुक्नु, औषधि गर्नु भन्दा अघि रूवाले कान भित्रसम राम्रो सफा गर्नु।

२. पोलेको फटकेरी पाउडर बनाएर यौटा रूलेदो महमा भिजाएर फटकेरीको धूलो लटपट पारेर कान भित्रसम्म पुग्ने गरेर लगाई राख्नु र बेलुकी बिहान लगाएको फ्याकेर अर्को लगाउनु यसरी दिनहु पाँच सात दिन गर्नाले कान पाकेको पुरानो रोग पनि जाती हुन्छ।

३. कान चिलाउदा औंलाले कोट्याउनु सिनका आदिले नकोट्याउनु। कान बेसी कोट्याउनाले कान कराउन थाल्छ, कान कराउँदा चाँडो उपचार नभए बहिरा हुन्छ।

४. पिपलको पात पिंधेर तेल मिलाएर आगोमा राख्नु त्यसबाट जो तेल निक्लन्छ निचोरेर कानमा लगाउनु कान दुख्न जाती हुन्छ।

५. अदुवा, मुलेठी, सेधानून, तेलमा पकाउनु र त्यो तेल शरीरको तातो जतीकोचिसो भएपछी कानमा लगाउनाले कान दुख्न, कान कराउनेमा लाभ गर्छ।

६. लहसुन र अदुवा तेलमा डड़ाएर त्यों तेल लगाउनाले कान दुख्न, कान कराउनेमा लाभ गर्छ।

७. बाख्राको दूध सेधानमक मिलाएर शरीरको गर्मी जतिको भएपछि कानमा लगाउनाले तुरून्तै कान दुख्न जाती गर्छ।

८. खाने तोरीको तेल कानमा लगाउनाले कानमा पसेको किरा मर्छ।
९. गाईको मूत शरीरको तातो झैं पारी कानमा लगाउनाले कान दुख्न जाती गर्छ। यदि कुनै पनि औषधि घाममा तताएर ठिक्को तातो हुन्छ।
१०. नीमको तेल मह मिलाएर सलेदो भिजाएर कानभित्र लगाएर राख्नाले कानको घाउ जाती गर्छ।
११. नानीहरूको कानको पछाडी पट्टी घाउ भए टीका लगाउने रोलीमा बालकको पिशाब फिटेर लगाई दिनु।
१२. ऊँटको मूत कानमा लगाउनाले कम्ती सुन्नेमा लाभगर्छ।
१३. लहसुनको रस मन तातो पारेर कानमा लगाए सर्दीले दु:खेको जाती गर्छ।
१४. दूध पिउने नानीको पिशाब मनतातो कानमा लगाए सर्दीले दु:खेको जाती गर्छ।
१५. बाख्राको दूध कानमा लगाउनाले कानको घाउ जाती हुन्छ।
१६. कुकुराको मूत अथवा मृगको मूत कानमा लगाउनाले कान पाकेकोमा लाभ गर्छ।
१७. पियाजको रस मनतातो गरी कानमा लगाउनाले कम्ती सुन्नेमा लाभ गर्छ।
१८. कान कराउने रोग हुनेले गीत गाउनु, लामो भाषाण गर्नु टाउकोमा नांगो बिना टोपी बस्तु, चिसो पानी पिउन आदि हुँदैन।

## नाकको रोग

१. पिनाश रोग शुरू हुंदा नै गुड़ र दही गोलमरीच मिलाएर खान शुरू गरे पिनाशको रोग हराउँछ।
२. दूबोझार कुटेर निचोर्नु तेसको चार गुना तेल पकाउन तेल मात्र

रही रस डड़ी सकेपछि नाकभित्र सम्म पुग्ने परेर दिनमा दुई तीन पल्ट लगाउने गरे नाकबाट पानी आई बस्नेरोगमा लाभ गर्छ पुरानो यस प्रकारको रोग भए पनि जति गर्छ।

३. पिनास भएर नाकमा किरा परे बाँसको टुसाको रस पाँच तोला तारपीनको तेल एक तोला फिटेर नस झैं भित्रसम्म पुग्ने गरेर लगाउनु।

४. रूघा लागेको विषयमा अगाडी पृष्ठमा हेर्नु होला।

## मुखको रोग

१. ओठ फुटेको घिउमा नून मिलाएर लगाउनु अथवा ग्लिसरीन लगाउनु।

२. सयपल्ट चिसो पानीमा धोएको मखन घिउ नून फिटेर लगाउनु।

३. तताएर हिङ्ग दाँतमा च्यापी राखे दुख्ने जाती गर्छ।

४. कटेरी (कचेडाको) धुवाँ किराले खायेको दाँतमा लगाउनाले किरामर्छ किरा लागेकोमा यसको बराबर अरू औषधि पाउदैन। कचेडलाई हिन्दी मा कण्टकारी मारवाड़ीमा रिङनी भन्दछन्, यो उत्तम औषधि हो, किरा हेर्नू मन गर्नेले थाल सफा गरेर सफा पानी थालमा राखी घूपौरोमा भरिलो आगो लगाई छोपेर नलीद्वारा दाँतमा किराले खाएको ठाउँमा फुसुसुधुवा लगाउदै राल थालमा चुवाउनु र थालमा नियालेरहेरे माकुराको जाली झै मसिनो टाउको भएको किरा देखिन्छ। २४ पल्ट यसरी धुवाँ लगाए सबै किरा मर्छ।

५. आक, सिउड़ीको दूध किराले खाएको दाँतको खाल्डोमा भरे किरा मर्छ।

६. मह र खाने तेल मिलाएर कुल्ला गर्नाले गिंजा दुख्ने जाती गर्छ।

७. कपूरको टुक्रा दाँतमा च्यापी राख्नाले लाभ गर्छ।

८. ल्वाङ च्यापनाले अथवा ल्वाङको तेल रूवामा लगाएर च्याप्नु दाँत दुखेकोमा लाभ गर्छ।

९. फटकेरी र नून पिंधेर दाँत मल्ने गरे दाँत बलियो र सफा हुन्छ।

१०. जामुनको दतीवन गर्नाले दाँतबाट खून आउन बन्छ हुन्छ।

११. बाह्र (बारह) सिंगेको सिङ डढाएर त्यही खरानीले दाँत मले दाँत बलियो हुन्छ।

१२. तातो पानीले कुला गरे गिजा दुख्नेमा शान्ति पाउछ।

१३. नून पिंधेर मलनाले दाँत कुड़ीएको जाती गर्दछ।

१४. लुगा चपाउनाले दाँत कुड़ीएको जाती गर्दछ।

१५. किराले खाएको दाँतको खाल्डोमा कपूर र नौसादर मिलाएर खाँदनु।

१६. मुख गनाउँछ भने जुलाप खानु।

१७. पेपरमेण्ट र कपूर मिलाएर दाँतमा च्यापनाले दाँत दुख्नु जाती. हुन्छ। यो सत्य जीवन बनिन्छ।

१८. बज्रदन्ती दतिबन गर्नाले हल्लिएको दाँत पनि बस्छ हल्ली न छोड्छ।

१९. बरको दूध किराले खाएको दाँतको खाल्डोमा लगाए किरा मर्छ।

२०. अमलाको बोक्रा कुटेर कुल्ला गर्नाले दाँतको किरा मर्दछ।

## जिब्रोको रोग र गलाको रोग

१. खाने तेल र मह मिलाएर घसनाले जिब्रो फुटेको तथा अन्य रोग हराउछ।

२. जिब्रोमा जुन सुकै भए पनि जिब्रोबाट खून निकाले सबै रोग जाती हुन्छ।
३. पोदीनाको पात र मिश्री मिलाएर चपाएर थुकनु जिब्रो पील्सिएको हराउँछ।
४. पिपलको रूखको बोक्राको भस्म जिब्रोमा घसनाले जिब्रोको घाउ पिल्सेको सबै जाती हुन्छ।
५. जिब्रोमा जलन हुन्छ भने दही पानीमा फिटेर कुल्ला गर्नु।
६. हरड (हरडा) को काढ़ा बनाएर सुतने बेलामा मह मिलाएर पिउनु गलाको हर प्रकारको रोग टनसील सबै जाति हुन्छ। काढा बनाउनु साथै खानु पहिला बनाएर राखी फेरि तताउनु हुँदैन।
७. चमेलीको पात चपाई बस्नाले मुखको घाउ, मुख गनाउने हराउँछ।
८. ढुंग्रेझार (ब्राह्मी) दुई चार पात च्यापी राख्नाले घाँटीको रोगमा लाभ गर्दछ।
९. माजु फल (माझीफल) मुखमा सुपारी झै खेलाई राख्नाले गलाको रोग सबैजाती हुन्छ। गला घाँटीलाई भनिन्छ।
१०. गुलाबको फूल चपाएर अलि अलि खाने गरे घाँटीको रोगमा लाभ गर्छ।
११. गलाको रोगमा स्वर बसे घाँटी दुखे अदुवाको टुक्रा ताछेर छुरीले विर्को लगाउने हिसाबले खोपिल्टा पारेर अलिकता हिंग र नून लगाउनु र त्यो अदुवाले नै विर्को लगाई आटा अथवा मैदा मुछेर त्यो अदुवालाई बीचमा राखेर डल्लो पार्नु र आगोमा आलू झै पोलनु। डल्लाको आटा डढेपछि निकालेर फुटाएर अदुवा निकालेर टुक्रा पारेर एक एक टुक्रा चुस्ने गर्नु रोग जाती हुन्छ।
१२. पानको जरा अथवा जेठी मधु (मुलेठी) मुखमा खेलाई राख्नाले पनि स्वर भासिएको जाती गर्दछ।
१३. नून पानी तताएर गलल्ल गर्नु घाँटी दुखेकोमा लाभ गर्दछ।
१४. फिटकेरी तातो पानीमा लगाएर गलल्ल गर्नु घाँटी जाती हुन्छ।

# स्टैथस्कोप (STETHESCOPE)

यो यन्त्रले सासको नली र मुटुको आवाज हेर्ने मात्र काम गर्दछ। फोकसो र सास नलीको खराबी चाल पाउन सक्छ। खुट्टा दुःखेको ढाड, कान नाक आँखामा यसको कुनै सम्बन्ध रहन्दैन, जरोमा निमोनिया भए स्वासको नलीमा खराबी भए चाल पाइन्छ।

थर्मामीटर यसमा 'ताप' शरीरमा जरोको अथवा गर्मी चाल पाउँछ।

| | |
|---|---|
| १०८.६ | डिग्री भए निश्चय मृत्यु |
| १०७ | सविराम जरो बाहेकमा मृत्यु |
| १०६ | तीव्र ज्वरो |
| १०५ | खतरनाक ज्वरो |
| १०४ | कठिन ज्वरो |
| १०२ | मध्यम ज्वरो |
| १०१ | हल्का ज्वरो |
| ९९.६ | स्वाभाविक अवस्था। |
| ९८ | स्वाभाविकमा केहि कम |
| ९६.६ | पतनावस्था |
| ९४ | हिमांग पतनावस्था |
| ९० | हैजा बाहेक मृत्युजनक |
| ९० | हैजामा भए मृत्यु समझनु |

## नाड़ी

१. नाड़ीको चालबाट शरीरमा गर्मी र सर्दी छुट्ट्याउन सकिन्छ। शरीरको भित्र गर्मी जति बेसी हुन्छ उमेर अनुसार नाड़ी चलनु पर्ने भन्दा छिट्टो चल्छ जति शरीरमा सर्दीको प्रकोप हुन्छ नाड़ी

उति ढीलो चल्छ। कसैलाई मुटु सम्बन्धी रोग छ र नाड़ीको गति छिट्टो चल्छ भने सर्दी चीजको सेवनलाभ गर्छ, गर्मी चीजले अरू रोग बडछ नाडीको गति १ मिनिटमा उमेर अनुसार कति चल्नुपर्छ, यहाँ तालिका हेरेर थाहा लाग्छ। नाडी हेर्दा मिहेनत गरेको बेला, हिडेकोबेला,कुनैकाम गर्ने बित्तिकै हेर्नू हुँदेन, पूरा विश्राम लिएपछि हेर्नुपर्छ।

## तालिका

| *उमेर* | *कतिपल्ट प्रति मिनटमा नाडी चल्छ* | | | | |
|---|---|---|---|---|---|
| जन्म भएपछि | १३० | देखि | १४० | पल्ट | ,, |
| एक वर्षको बालकको | ११५ | देखि | १३० | ,, | ,, |
| दुई वर्ष ,, | १०० | देखि | १२० | ,, | ,, |
| तिन वर्ष ,, | ९० | देखि | ११५ | ,, | ,, |
| पाँच वषर्मा ,, | ८० | देखि | ९५ | ,, | ,, |
| सात वर्ष ,, | ८५ | देखि | ९० | ,, | ,, |
| सात वर्ष देखि १४ वर्षको | ८० | देखि | ८५ | ,, | ,, |
| पन्द्र वर्ष देखि एकाईसको | ७५ | देखि | ८५ | ,, | ,, |
| एकाईसदेखि माथि जबानको | ६५ | देखि | ७५ | ,, | ,, |
| बृद्ध अवस्थामा | ६० | देखि | ७० | ,, | ,, |

नोट : जाड़ोमा नाड़ीको गति केही ढीलो हुन्छ।

●